## गुल्मेली तन्नेरीहरुको उत्साहको ज्वाला



'बिहानी पख' पत्रिका उत्तरोत्तर वृद्धिको साथै
…भावनालाई अँगाली नेपाली साहित्यको उत्थान गर्नमा
…दर्शक बन्न सकोस् ।



…य महाराजाधिराज



# यस सङ्कलनका साहित्यिकहरू

सूचना:—भूलले गर्दा पृष्ठसंख्या १२ बाट १३ हुनुपर्नेमा १७ छापिए छ। साथै अरु चन्दादातानामावली एवं सबै छपाईहरूमा यत्न गर्दागर्दै पनि कैयौं त्रुटी रहन गए होलान्, जसकालागि सबै पाठक वर्ग संग समिति क्षमा प्रार्थीछ। गु० उ० व० स०

## दुइटा कुरा

आजका कोपिला भोली बिहानै फक्रनेछन् । त्यो बिहान आउला उत्साहवर्द्धिनी समितिका "आशा पूरा होलान् । गुल्मेली परिवारले जन्माएको यो बालक इष्ट-मित्रको माझमा आफ्नो स्वाभाविक बाल्य हृदयलाई लिएर मुस्कुराउनेछ ।

पहिलो प्रयास र साना-तिना भावनालाई उत्साहित गर्नु नै पत्रिकाको मुख्य उद्देश्य हुनाले लेखहरूमा उचित सौन्दर्य आउन सकेन, तापनि सम्पादकको कलम दर्शक सज्जनहरूबाट टूट फूटको क्षमा र भविष्यको लागि सुधार सन्देश पाउने आशा राख्छ; —सं० म०

## शुभकामना

गुल्मी उत्साहवर्द्धिनी समिति वाराणसीको खास उद्देश्य मलाई थाहा नभए तापनि, त्यसको तर्फबाट निस्कने "बिहानी पख" पत्रिकाले निश्चय नै भर्खर प्रगतिको पथमा लम्कन लागेका नेपालीहरूलाई गोरेटो झैं बनी नयाँ-नयाँ पथहरू प्रदर्शन गराई नेपाली साहित्यमा रहेका आजसम्मका कमीलाई पूरा गरी नेपालीयताको परिचय संसारलाई दिन सकोस्, यही मेरो शुभकामना छ । श्री जयाप्रसाद शर्मा

बड़ा हाकिम गुल्मी गौडा ( तंघास )

### समितिका कार्यकारिणीहरू:—

सभा सञ्चालक—मोदनाथ 'प्रश्रित'
,, आयोजक—पशुपति ज्ञवाली
साहित्य संयोजक—गोविन्दराज ज्ञवाली
अर्थ सञ्चालक—तारेन्द्र 'माण्डव्य'
सूचना प्रचारक—ओमप्रसाद घिमिरे

### संपादक मण्डल

प्र० गोविन्द राज ज्ञवाली
सह० लेखनाथ ज्ञवाली
,, रामचन्द्र पोखरेल
,, पुरुषोत्तम आचार्य
,, माधव प्रसाद ज्ञवाली

## उत्साह जागा रहोस्

—श्री एम्० बी० बी० शाह



हतोत्साह, कंजोरी,
लालसा, अनि नीचता;
दुश्मनी, फुट, बेमेल,
झमेला, त्रास औ शंका।
वैमनस्य मनुष्यमा,
भरेको पृथ्वी डल्लोमा,
टिक्दैन कुनै वस्तु,
परिवर्तनशील विश्वमा।

तसर्थ-देशको हित,
गर्ने हाम्रो इच्छा बढोस्,
बिर्सी कालो कपट मैलो,
छाती हाम्रो ठूलो बनोस्।
नेपाली र नेपालको,
भविष्य फलोस् फुलोस्,
देश संझी सदै हाम्रो—
"उत्साह जागा रहोस्"।
—( श्री ५ महाराजाधिराज)

# बिहानी पख

—लक्ष्मीप्रसाद ज्ञवाली

कैलेदेखि समान बन्धु हुनमा गुन्दै रहेको थियो,
फेरि भावुक वर्गको हर-घड़ी आशा गरेको थियो ।
त्यस्ले गर्भ्म परेर पर्वतविषे देख्यो जसै साहस,
'गुल्मी साहस बर्द्धिनी समिति' को झुल्क्यो बिहानी-पख ॥१॥

ओर्लो पर्वतबाट बालक बटु बायाँ सरेको थियो,
ज्ञाता ज्ञानी भनेर बाबु, करलें बाटो बताई दियो ।
तोते बोली लिएर आज जनको साहित्यको काखमा
नाची तुष्ट हुने छु लौ अब भनी, झुल्क्यो बिहानी-पख ॥२॥

कालो रात थियो पछाडि उसको अज्ञान स्वाभाविक,
खेल्थ्यो हेर समाज बालकजनी आफु रहेको घर ।
ब्यूँझी रोदन गर्दथ्यो जब पछि 'माता गईन्‌की ?' भनी,
आईन् शान्ति दिलाउँदै जननी लौ झुल्क्यो बिहानी-पख ॥३॥

झुक्यों ज्ञान गर्‍यो बढ्यो सुजनले हेर्ने बिरुवा भयो,
आफु मानवता बनेर हिंड्ने आदर्श पन्था लियो ।
त्यस्ले व्यक्ति समाज, बन्धुहरूको आशा पुर्‍याईकन,
हाँस्दै संस्कृतिको पवित्र पथमा झुल्क्यो बिहानी-पख ॥४॥

हाम्रो भारति-पत्रिका सुर सबै दृष्टि लगाई रहुन्,
श्रद्धा राखी जगाई ज्योति मनको वृद्धि सबैले गरुन् ।
भन्ने ध्येय लिएर आज समिति साहित्य-उद्धारक,
आयो हेर समाज यो प्रगतिको झुल्क्यो बिहानी-पख ॥५॥

गेहाँवादि ( गुल्मी )

# म फर्किहाल्छु—

—श्री वासु शशी

मलाई सखारै उठाइदिनू
कुहिरो के के लुकाउँदो रहेछ
हेर्न जान्छु त्यसभित्र म आफै पनि लुक्छु
ससाना खोलाहरू र रूखहरू र डाँडाहरूको गाउँमा
बनकालीमा
र हेर्छु :
ढुकुरहरूले कराई-कराई भोर पारेको
अन्धकार देखाई-देखाई चन्द्रमाले बिहान ल्याएको
तिमी गएर बिरुवाहरूलाई हल्लाउँदै गर्नू
र कोपिलाहरूलाई जगाउँदै गर्नू
बाछाहरूको दाम्लो खोलिसक्नू,
ठेकोमा मदानी हालिसक्नू,
बस, म त्यो सूर्योदय आकाशलाई सुम्पेर फर्किहाल्छु,
आकाशलाई त्यो सूर्योदय सुम्पेर म फर्किहाल्छु,
मलाई जो तिमी उठाइदिन्छौ त्यो म सूर्योदयलाई चढाएर फर्किहाल्छु,
तिमी जो भिज्भी सक्छौ म त्यसलाई लिन फर्किहाल्छु



## उषा—

—हरिप्रसाद पोखेल

गयो अब निशीथिनी समयको मलीनच्छटा,
प्रसन्न मुख शोभिए सकल दिग्वधूका उता।
विलोल सब पक्षीका गण प्रभाति यो गाउँछन्,
चरर्र चिरिरी गरी सकल व्योममा धाउँछन् ॥ १ ॥
बढाई रथ सूर्यको अरुण उत्रिए मार्गमा,
डराई सब उल्लुका गण छिपे गुहा भागमा।
निशाचर भए जसै किरण-घातले आहत,
खड़ा भई उषा गरिन् मधुर हास्यले स्वागत ॥ २ ॥
चकोर-गण-दम्पति पनि मिले खुसी भै रहे,
कठोर मनका तथा हृदयका व्यथा गै गए।
परस्पर जुटे गरे कथन रात्रिको यादमा,
अहो ! प्रकृतिको कड़ा नियमको छ यो वेदना ॥ ३ ॥
उड़ाई जलका छिटा बटुली फूलका केशर,
प्रभात मृदु वायुको गति बढ्यो गरी सर्सर।
उठे तरुण कामिनी जन सबै निशा झैं भई,
भविष्य पनि सोंच्दथे प्रकृति कौमुदीको लिई ॥ ४ ॥
रंगाई सब चौ-दिशा अरुण साथ ली पूर्वमा,
दिनेश पनि शोभिए प्रकृति-नील त्यो व्योममा।

निशाभर विपत्तिको सही कठोर त्यो दीनता,
सती कुल-वधूसरी कमलिनी बनो पूजिता ॥ ५ ॥
परस्पर मिली-जुली अब उठौं बनौं जोशिला,
बिहानी-पख भैसक्यो सब भए मङ्गा होसिला ।
उषा अब छिटै तिमी ! गई पुऱ्याऊ सन्देश यो,
"प्रभात परिपूर्ण भो अब नलेऊ आलस्य त्यो" ॥ ६ ॥

—पराल्मी (गुल्मी)

## परीक्षण

—बालकृष्ण सम

( गद्य कविता )

कुसुम, कुसुमी रङ्ग, कुसुमे-रुमाल, कुसुमाकर, कुमुद, कुमुदिनी, कुमुदबान्धव, ककुन्दर, शृङ्गार, साहित्य, सङ्गीत, कला, संगमर्मर-मूर्ति, चित्रकला, मीन, मीनाक्षी, हिमाल, झरना, फोहरा, आतशबाजी, डाँफे, मजूर, अश्व, सप्ताश्व, गुलाफ, कोकिल, इन्द्रेनी, इल्वला, चपला, कादम्बिनी, दाखको झुप्पा, स्याउ, अजिनयोनि, राजहाँस, अङ्गना, नितम्बिनी, वयस्थ, सुकिला बालक, बालिका, सब-सब सौन्दर्य-परीक्षा दिएकोमा उत्तीर्ण भए; तर गाजल लगाएका स्वच्छ सेतोको बीचमा स्पष्ट काला नानी भएका नरम परेलाले घेरिएका गभीर एक जोर वामलोचन शत-प्रतिशत संख्या पाएर समुत्तीर्ण र सर्वप्रथम भए।

र यल ने० एकेडेमी ( काठमाण्डू )

## कामना

—भागवत शर्मा ज्ञवाली

निद्रादेखि उठेर विश्वभरमा लागे सबै मानव,
आफ्नो लक्ष लिएर कार्य-पथमा गर्दै ठूलो साहस ।
अन्धो मोह लिएर मस्त अब छौ बिर्सी सबै व्यर्थमा,
ती कर्तव्य र उच्च लक्ष बढ्ने बाटो तिमी नींदमा ॥ १ ॥

लौ, लौ, हुन्छ भनेर हुन्न यसरी आलस्य छोडी अब,
ऊँचो लक्ष्य लिएर कार्य-पथमा लागी अगाडी बढ ।
ठूलो भार छ काँधमा सकलको त्यसलाई राम्रो गरी,
थामी पारि पुर्याउनु छ तिमीले आफै बनी साहसी ॥ २ ॥

आफै नै अनुकूल भै समयको सत्मार्गमा चल्नुछ,
राम्रो उन्नति औ विकास छ जहाँ बाटो त्यही श्रेय छ ।
छोडी तुच्छ निराशलाई फलको आशा लिई कार्यमा,
धेरै कार्य छ गर्नु मोह नलिई छोटो यसै कालमा ॥ ३ ॥

भन्दै मानवता यहाँ सुगुणले फैलाउँदै सत्वर,
चारैतर्फ फिजाउँदै विमल यो आभा अति सुन्दर ।
दीप्ति-ज्ञान लिएर जागृति नयाँ उद्बोधको खातिर,
राख्दै कान्त पदावली समयमा आइन् बिहानी-पख ॥ ४ ॥

आशा-सूर्य उदाउँदै छ मणिझैं विज्ञानको लोकमा,
खोल्दैछन् अरु देशले कमल झैं आँखा नयाँलोकमा।
फैलेको नव-कान्तिमा झिलीमिली नेपाल झल्कोस् सदा,
हे! सुन् भानु अगाड़ि कोमल नयाँ यी भावना कोपिला॥ ५॥

—मानकोट (गुल्मी)



# आमा मेरी

—कृष्णप्रसाद पराजुली

आमा! मेरी हृदय-मणिकी हौ तिमी उच्च हार,
बिर्सू कहाँ, मधुर स्मृतिले डाक्छ झन् बार-बार!
तिम्रो राम्रो बचन मुखको, प्रेमको दिव्य छाँट,
संझी-संझी छिन-छिन म ता बन्छु साह्रै उराठ!

तिम्रो चोखो हृदयतलमा बास पाई म आएँ,
हाँसी-खेली करुण पनमा बाल्यवेला बिताएँ।
आमा! छोड्यौ किन यति छिटो? जल्छ छाती अघोर,
प्यारो तिम्रो चरण छुन नै हाय भैगो कठोर!

तिम्रो आशा चहक म थिएँ औ तिमी दीप मेरो;
निभ्दा चाँडै छट-पट भएँ विश्व भो हा! अँधेरो।
कैयन् तिम्रा गुन-रिनहरू तिर्न मौका मिलेन,
खोस्यो पापी कुन नियतिले? बस्न साथै दिएन।



स्वप्ना भित्रै छिन भर तिमी आउँछयौ झुल्किएर,
हेर्दा हेर्दै अनि पछि कहाँ पुग्दछयौ अल्पिएर।
ताजा तिम्रा प्रिय स्मृतिहरू साथ बोकेर रुन्छु,
गाई एक्लै विरह मनका आँसुले नित्य धुन्छु।

ल्याउँदै राम्रो चम्-चम् गरी चम्किने चालबाट,
राती तारा बनिकन तिमी स्वच्छ आकाशबाट।
हेर्दी हौली तलतिर सधैं पुत्रको यो मुहार—
मैले मात्रै सकिन कहिल्यै देख्न तिम्रो मुहार।

तिम्रै छायाँ मनितिर बसी गाउँथे गीत राम्रो,
तिम्रै मायाँ मधुरतममा हेर्दथें विश्व राम्रो,
तिम्रा वाणी सुनिकन सधैं बन्दथें फूर्तिवाल,
आमा! मेरी प्रिय हृदयकी हौ तिमी कीर्तिवाल!

ऐले तिम्रा कुसुम सरिका बोल काहाँ म भेटूँ!
तिम्रा राम्रा सरलपनका हास्य काहाँ म देखूँ!
तिम्रो संग्लो मन चुडिलिने प्रेम काहाँ म ल्याऊँ!
आमा! मेरी जगत जननी! देख्न काहाँ म पाऊँ!

—रायल ने० एकेडेमी (काठमाण्डू)

"मखमलमा सुत्नेहरूको हृदय पत्थरको हुन्छ"

"प्रश्रित"

# विषकै सिर्जना

—श्री भवानी 'भिक्षु'

अमृत-पायी बन्धु !—
अमर होऊ,
मेरो निम्ति त—
विषकै सिर्जन।

थोपा-थोपा सुधा-सुशोषक
अफ अमरत्व-ब्याजका पोषक।
मेरो निम्ति त बाँच्नै गाह्रो
मुटुको रगत न बाँड़े सम्भव् !
तिम्रो पुण्य संगाल्ने जीवन,
मेरो—
पाप लुटाउने जीवन,
स्वर्ग प्राप्तिमा—
मृत्यु दुवैतिर,
भेद अलिक
क्रन्दन, अभिनन्दन !

पुण्य-नमित तिमी—
हे पुण्यात्मा !
भन्दछ पापोत्थित पापात्मा,
—प्राप्ति प्रार्थीरूप देवको
किन्तु मनुजको—
उन्नत लोचन।

रायल नेपाल एकेडेमी ( काठमाण्डू )

# रात र दिन

—आनन्ददेव भट्ट

सती देवीको लाश बोकेका शिवका जस्तै
ताण्डवमय मेरा वेदना
अस्तित्व प्रतिपल म्याँ-म्याँ गर्थ्यो
करुणामय मेरा दीन भावनामा,
हठात् उर्लेका आँधी बेरी
उचालिन्थे, पछारिन्थे, मेरा तर्कना,
अविरल बर्षने पानीका थोपा
मेरा आँखाका पग्लेका दाना;
प्रयत्न खाली केराका थाम
हात्तीका सुँड हाँस्थे सरलतामा
उँखेला उँखेल जीवनका सपना
क्रूर पुष्ट थिए; नदीका बगरमा।
कसले रोक्ने यो विध्वंस लीला ?
विश्वास रुन्थ्यो आफ्नो पुङ्को पनमा।
हाहाकार, खाली चर्को आवाज
थोत्रा टिन ठटाए जस्तै रित्ता कल्पना
म स्वयं माटोको कमजोर कल्पना।
जतातत्तै एउटा हाउँ गर्दो विकृति

कसरी भनूँ—अझ पनि बाँचि नै रहुँला ?
संघर्षमय मेरो जीवनमा
पसिना जित्थे असिना वर्षाका,
हाड़ छिप्पिए, छाला जितिए
आँखा झ्ल्झ्लि सधैँ थिए ओढारमा.
बिरह बग्ने यो गाला को खोल्सो
पीर उक्लने यो घाँटीको ढुंग्रो
कोलाहल रोक्ने यो यन्त्र कानको
सब भिन्न भै झुके थे मानिस भन्दा
बाहिरी तिरस्कार थियो थोत्रो—गधाको जस्तो ?

शून्य रात—
समय हिंड्थ्यो टिक्टिक् पाइलो
एक्लो बादल
ताराको टोलाई एक्लो,
भावहीन चन्द्रमा—डाँडाको पहिरो,
उजाड उजाड—मानौं फोस्रा प्रयत्न
चहाने छाती यस धर्तीको
सराप्न हुन्नथ्यो र मात्रै आफ्नी आमालाई
नत्र त लाग्द्थ्यो
म छोरो— मसानमा मिल्किएको एउटा काँचो अमुल्टो ।

आत्म करुणा सम्झी झन्-झन् भय लाग्दो
यो हो चिहान मानिसहरूको
र हार्दा-हार्दै पनि मैले भने थे—लास हुन्न कात्रो बेरेको ।
उड्छु-उड्छु म पहिरो जाँदा आसनबाट
उड्छु-उड्छु म—आँगो लागेको गोठबाट
भाग्छु-भाग्छु म यमराजको निर्दयी पक्राईबाट
अरे म मानिस चाहन्न मौलोको बोको हुन ।
तर
मैले तृणभर पनि हक पाए पो !
मलाई जगल्ट्याई भन्यो हुरीले—
तैंले भाच्चिनै पर्छ,
मलाई हुत्याउँदै भन्यो—छ्याप्प किच्च आएको पहिरोले
तैंले निसास्सिनै पर्छ ।
मैले माँगे खालि सानो माँग
"पख त पख मेरो पनि थोरै भन्नु पर्ने छ ।"
तर, उल्टो घेरा लाग्यो श्याल र गिद्धहरूको
सोधे तिनले—ख्वकारे स्वरमा—तेरो रगत कसरी तेरो ?
भाले दाँतमाथि दाह्रा, चुहरे चुच्चामाथि चुप्पी नंग्रा
मेरो शरीर छिया-छिया भयो
बगेको आफ्नै रगतमा मेरो प्रतिविम्ब देखियो ।

निश्चेत ताछिएको तन
तानिएको लाल पाते जिब्रो
सिसाका जस्ता सारहीन आँखा
केवल नाडीमा कम्पन थियो—धमीलो ।
संभवतः तिनका काला आँखाले ठाने—मान्छे मऱ्यो
यो लाश केगर्नु छ र यसबाट ?
उनीहरू कौवाका घाँटी वंटार्न छोडी क्वाः क्वाः मात्रै कराए
ती डाँकाहरू सिन्दूर जात्रा गर्दै—
स्वर्गतिर लागे—नारीत्वको बिस्कुन सुकाएको स्वर्ग
तिनको विजय दुन्दुभि गाई रहेथ्यो
"बीर-भोग्या वसुन्धरा ! बीर-भोग्या वसुन्धरा !!"
अलिक बेरमा मेरो चेतना उघ्रयो ।
धर्तीमा पछारिएको म, अर्धमृत प्राण
सुन्न थालें—
म शान्ति प्रभात हुँ कोमल चुरा
तिमी जीवित छौ, विजयी छौ ।
म सित्तल मलय, कोकिल संगी
तिमी अजय र अमर छौ ।
म वसन्त हुँ किसलय मगमग
तिमी मेरा पाहुना हौ

हामी चिर-विर पन्छी-गाना
सर्वप्रथम अभिवादन गर्छौं ।
हामी हिउँका अग्ला पर्वत
तिर्खा मेट्ने पानी दिन्छौं
मूल फुटेमा हामी छहरा
तिम्रो घाउ धोई दिन्छौं
हामी च्टेका ढोला सन्तति

वीरको हामी सन्मान गर्छौं,
नेपालीको तिमी जिउँदो छोरो
ध्वजा, पताका सब टक्र्याउँछौं ।
मुक्त कण्ठले निर्भय स्वरमा
हामी भन्छौं हामी हौं दीन
संघर्षमा थ्यौ पहिले एक छिन
अब उठ ज्वाल्य क्रान्ति नवीन ।"

धरान ( नेपाल )

*

++++++++++++++++++++++++++++++++++++++

"तिम्रो शरीरकन पोषन मासु खान
उस्को शरीर उसले सब छोड़ीं जान
अन्यार्थ यो समझँदा सब आँत कामी
लेख्नू पर्छ कलमै सकिदैन थामी ।"

स्वर्गीय-पं० दधिराम उपाध्यायः
( गु० खिदिम )

# शिव पाणिनि प्रार्थना

—श्री नारायण गौतम

हे चन्द्रशेखर ? महेश्वर ? शूलपाणे ?
गौरी गणेशहरू साथ सवारी साँढे,
नाचे र ताण्डव अपूर्व सुशान्ति ल्याऊ,
त्यो ज्ञान मूल डमरू दिलमा बजाऊ।

हे पणिनें शिवजीको डमरूपदेश,
पाए र व्याकरण-बीज गरेर वेश,
रच्नू भएछ दहमा बसी सूत्र जाल,
नेपाल विश्व भरको गुरु भो विशाल।

शालङ्कि हे ! जनक, जानकी, बुद्ध तारा,
जस्तै तपाञि लिई उच्च विचार धारा,
नेपाल देश अरु एक सिढी बनाई
माथि पुऱ्याउनु भयो शिव-लोकलाई।

हे दाक्षि पुत्र ! भरि देऊ दिमाग-भित्र,
त्यी ज्ञान ज्योतिमय अमृत कै पवित्र,
जसले स्वसंस्कृति र आत्म-विवेक साथ,
नेपाल भौतिक-विकास गरोस् प्रकाश।

—पाणिनि व्याकरण विद्यालय तपोभूमि दह खिदिम (गुल्मी)



# खिइन्छन्-पग्लदै

—परशु प्रधान

बिहान हुन्छ
मेरा आँसु सितका थोपा बनी
पातमा टल्पलिन्छन् ;
मेरा विसाद बादल बनी
शून्यमा रूपलिन्छन् ;
यसरी प्रत्येक बिहान-साँझ
प्रत्येक साँझ-बिहान
मात्र मेरा हारका गीतहरू
यस कानमा गुञ्जिन्छन् ।

मेरा आँगनका बालुवाहरू
केवल बालकको घर बन्दछन् ;
मेरा चेतनाहरू
केवल सृजनाका उपहास-
बन्दछन् ;

बन्छ—भनिन्छ
मेरो जीवन
मैन-बत्ती झैं पग्लदैं खिइन्छ
उफ् ! खिइन्छन्—पग्लदै ?



सुती-सुती स्नान खोज्ने लुच्चाका कानका मुर्रा
उँखलेर खेतमा हलो जोताउनु पर्दछ ।
'गुल्मेली आबाज'

# दहको सम्झनामा—

—खगेन्द्र "पुष्कर"

शान्त एकान्त र एकाग्रतामा एकको चिन्तनमा आफ्नो शरीरलाई बिर्सने आत्माले कुनै दिन यिनै शिखरको आश्रय लिएको थियो। अज्ञानरूप सन्देहको निवारण र नयाँ कुराको अनुसन्धानको लागि अनेक महान् आत्माहरूले यिनै शिखरको शून्तो वातावरणलाई सन्दिग्ध आत्माले सत्य पथको खोज गर्ने प्रयोग-शाला बनाएका थिए। हाम्रो सर्वप्राचीन वेद जसले हरेक युगको लागि नयाँ-नयाँ सन्देशहरूले प्रेरित उपदेश गर्दछ र प्राचीन भएर पनि 'क्षणे क्षणे यन्नवतामुपैति तदेवरूपं रमणीयताया:" भन्ने माघ को सौन्दर्य परिभाषा-चरितार्थ गर्न सक्दछ, त्यो यिनै कन्दरा र गुफाबाट निस्केको आवाज थियो। मृगशावकसंग खेल-बहार गर्ने पवित्र हृदयका मुनि-कन्याहरूका पद-लाञ्छित यिनै मैदान जीवन र मरणको अनु-सन्धानमा चिन्तनशील मुनिहरूलाई आश्रय दिने यिनै गुफाहरूले आज पनि हाम्रो प्राचीन इतिहास र हाम्रा पुर्खाहरूको चरित्र एवं प्रकृति प्रेमको उदाहरणलाई हाम्रो स्मृति पटलको साम्नेमा छर्लङ्ग पारी दिन्छन्।

यिनै उच्च शिखरको यात्राहरूले प्रत्येक भावुक हृदयमा एकान्त र प्रकृति-प्रेममा कस्तो पवित्रता छ त्यो कुरा स्पष्टरूपमा झल्काई दिन्छ। डमरूको शब्दमा व्याकरण शास्त्रको गहन अध्ययन गर्नु यही एकान्त र स्वच्छ प्रकृतिमा एकको आराधना गर्नुको फलरूप थियो।

कल्पनाशील हृदयले बादलको एक टुक्रा भित्रमा जीवनका अनेक चित्रहरूको दर्शन पाए झैं ध्यानशील एकान्त-प्रेमीको हृदयलाई पातको आवाजले पनि अनिष्ट एकको दर्शन गराउँ छ।

अध्यात्म-दर्शनको चिन्तनमा अनेकौं वर्ष सम्म साधनाद्वारा आफ्नो शरीरमा घूमिराको गोलो लाग्दा पनि थाह नपाउँने सत्यका उपासकहरूले यिनै शिखरमा वास्तविक सत्यब्रह्मको दर्शन पाए थे। जीवनदर्शनको अध्ययनमा चिन्तनको आश्रय लिएर आत्मा भित्र एकता-समताको गूढ़-तत्वलाई भेटाएर जीवन-मुक्तिलाई अनेक महा-पुरुषहरूले यिनै चुलीमा प्राप्त गरे, आत्माको परिचयलाई जीवनको सफलता सम्झे।

यिनै एकान्त स्थान मध्ये पाणिनि-तपोभूमि दह चौरको बीचमाको पोखरी महर्षिका सहयोगी वृद्ध काफल मेरो तिर्खालु हृदयलाई सदैव अधि बढाई रहन्छन्। र महान् आत्माहरूको स्मृति ल्याएर पोखरीको पानीले मलाई पनि महर्षि पाणिनिको गौरव प्रदान गर्दछ।

काफलको फेदमुनि बसेर अध्ययन गर्ने स्वच्छ हृदयी बालकहरूलाई देख्दा मेरो हृदय प्राचीन गुरुकुलको कल्पनामा पुग्दछ। विश्वासको साथमा आउने मीठो आशाले यिनी बालकहरूलाई पाणिनिको कल्पना गर्दछु र यस वातावरणलाई यिनीहरूको जीवन निर्माता सम्झन्छु।

नेपाल आमाको वास्तविक स्वरूप उत्तरमा उच्च हिमचुली र दक्षिणको समतल मैदान यस दह चुलीको शिखरमा गए पछि छर्लङ्ग

दृष्टिमा आउँदछ र अति राम्रो जन्मभूमि तपस्थली नेपाल एक पटक शान्त वातावरणमा मुस्कुराएको भान हुन्छ।

जब म त्यो दहचुलीलाई देख्दछु मलाई यिनै भावनाले बोलाउँछन्। कुनै दिन यहाँ डमरूको शब्दमा अनेक ऋषि, मुनिका संशय मेटिएका थिए। डमरूको शब्दमा व्याकरण शास्त्रको दर्शन पाएका तिनी दिन, त्यो चिन्तन, त्यो एकाग्रतामा एक भित्र अनेकताको दर्शन र यिनै डाँडा काँडामा हाम्रा पुर्खाहरूलाई आर्य संस्कृति र भारतीय दर्शनहरूको झल्को मिलेको थियो भन्ने कुरा जब सम्झन्छु। सम्भव-असम्भव, असम्भव-सम्भव, सत्य-असत्य, असत्य-सत्य, ठूलो-सानो, सानो-ठूलो, सुख, दुःख, दुःख, सुख, सम्झने द्रुति भएको भावुक हृदय भए, आज यी बनका फूलको आनन्दले भरिए र मेरा साथी भाइहरूको शुष्क हृदयलाई कति आनन्दमय बनाउँदो हुँ भन्ने भावनाले मेरो मनलाई सदै लोल्याई रहन्छ अनि जोरसंग सोध्न मन लाग्दछ, के यिनी डाँडा, काँडा, तपस्थली, मृगस्थली आजको युगमा पनि अतीतको याद दिलाएर हाम्रो गौरव बढाउन सक्दैनन् ?।

प्राणिनि तपोभूमि ( पर्गोना ) गुल्मी



स्वदेशी वस्तुको उपयोग नै देशोन्नतिको मूलहो।

परोपकार र परपीडा नै सबभन्दा ठूला पुण्य र पाप हुन्।

( वेद व्यास )

## प्रण :—

—कृष्ण प्रसाद ज्ञवाली

तिमी उता मता यता मनुष्य छन् कता कता ?
समाधि हैन यो बुझ्यौ परन्तु हो विचित्रता,
छ एउटै धरा तर समर्थको भएछ र ?
समाज कै परी कर कि भाग्य कै परीमा !

बिचार्छु आज रातमा म उठ्छु भोलि प्रातमा,
उठेर सत्यको कथा जताततै सुनाउँछु,
बरू मनै मरूँ अरु भएर पर्सि जीवित,
अघी सरी छिटै गरुन् नयाँ समाज निर्मित,

सुधारको लिई कुचो विच्छिन्न झैं भई हिंडे,
बढाउँछु म अन्धता र सत्यता सजाउँछु,
प्रदीप ज्ञानहीनको भई अगाडि बढ्दछु,
पराग प्रेमको छरी प्रसन्नता फिजाउँछु,

म खोज्छु दीर्घजीवन डुबेर नै समुद्रमा,
म ल्याउँछु सुधाकण उडी विशाल व्योममा,
म स्वर्गमा युगीकन सुरम्यता र वैभव,
उताछु भूमिमा अब मनुष्य लालसा सब,

थोर्गा ( गुल्मी )



# साँझ पर्‍यो—

—नारायण प्रसाद उपाध्याय अधिकारी

साँझ पर्‍यो भयाउँकिरी बास्यो बनलाई पारे र रन्झन,
झनझन भयाउँकिरीले सन्ध्या जगाउँछे,
चमेलीले रनबन फेरो लगाउँछे,
रिमी झिमी साँझ पर्‍यो गोधुलीले छायो,
पञ्चध्वनो बाजा बजे स्वर्ग गुञ्जी आयो,
साँझ.......................................................रन्झन।

मग मग रात्की रानी सुगन्ध फिँजाउँछे,
दिन भरि लुकी-लुकी सन्ध्या जगाउँछे,
पूर्वघाट चन्द्र तारा हिमाललाई घेर्छन्,
झुम्के साँझ कालो आयो शशी फुकी हेर्छन्,
साँझ.......................................................रन्झन।

पानीमुनि चन्द्रमाले छायाँ देखाएर
सर सर पश्चिमतिर बाटो सोभयाएर,
संसारलाई हेरी हेरी मुसु मुसु हाँस्छिन्,
सन्ध्या बति ज्योती बाली अन्धकार नास्छिन्,
साँझ.......................................................रन्झन।

सपनाले संसारमा कहाँ-कता लान्छ,
विपनामा सपनाको सबै नास हुन्छ,
रात्री बिते तारासरी कच्चा जीवनमा,
स्वप्ना भैं नदेखे है छैन विपनामा,
साँझ.......................................................रन्झन।

# विकास ?

—जगत बन्धु अर्याल

जो जन्म लिन्छ त्यो एउटा विभूति हो। सानो-ठूलो, गोरो-कालोमा
* मूलको आशङ्काले सोताहरूको लपेटमा पर्दा महासागरको तथ्य सम्झन असमर्थ रहनु, कस्तुरीको सुगन्धले मोहित भएको मृग कस्तुरीको खोजमा बन-बनै घुम्नु जस्तै सिवाय के !।

चाहे शूद्र होस् या अछूत ऐनले त सिद्ध गरि दियो कि औसर समान मिल्नं चाहियो नै, इकाईमा ( unit ) समान रहन चाहियो नै। जन समूह बनेर रहन सन्तोष छैन्। रक्षाको निमित्त कुनै बाटो निकाल्न त पर्‍यो व्यक्ति विशेष यसको भान् भईराखेको छ। समाजमा बहिष्कार र अछूतको भावना छदै छ। ग्रन्थहरूमा भले मिलुन् अथवा नमिलुन् समाजमा अवश्य पनि मिल्दछ। रहन-सहन तर्फ हर्ने हो भने गाउँमा हेर्‍यौं एउटी आइमाईसंग एउटा धोती सिवाय फेर्ने अर्को छैन, एउटो मोटाले जाड़ो गर्मी दुवै फाल्न पर्छ। कुनैले के भने र प्रश्न गर्छ भने हामीलाई त यो पनि बताउन आवश्यक छ नि—कसरी खाने ? कसरी बस्ने हो ? छिटो-छिटो कसरी सभ्य बनाउने ?।

कुनै पनि देशको प्रगति त्यस देशको अन्तिम व्यक्तिसंग आंकन आवश्यक हुन्छ। विकासको तुलनाको मांफदण्ड गाउँ था काठमाण्डू भैली ? व्यक्तिको माफदण्ड मन्त्री या नौकर ? यदि निम्न वर्गसंग आंक्दा त्यो उठेको छ भने समाज उठेको छ, अवश्य मान्नु पर्छ।

त्यसैको निमित्त विज्ञान प्रजातन्त्र हो। आइस्टाइनको निमित्त विज्ञान छैन, आजको विज्ञान हाम्रो निमित्त हो त यो युग विज्ञानको निमित्त पूर्णतामा पुगेको हुनु पर्दछ। पुराना धारणाहरूले ज्यादै गाह्रारोसंग समाजमा विश्वास पारेका छन्। यसमा उचित परिवर्तन होलान् त केही राम्रो हुनेछ। कार्यकर्ताहरूबाट काम होस र विकास पनि। पंचायत बनेर आफ्ना मञ्जिलमा पुगेका छन् त समाजमा भ्रष्टाचार, शोषण, घटन आवश्यक छ। अविकसित देशमा पूँजीको साधन कार्य कुशलता हुन्छ। जुन पनि तरिका अपनाइयोस् सामाजिक विकास र सामाजिक शक्तिबाटै हुन सक्छ, किनभने विकास त्यसै बेला सम्भव हुन्छ, जब त्यस अनुकूल समाज तैयार गराइयोस्। आवश्यक सामान विदेशमा तैयारभिए देशमा पुगेका छैनन्, यसैले जहाँ पहिलो कमी छ त्यहाँ ध्यान दिनु आवश्यक छ, किन भने असलि मत गलत हुन सक्दैन चाहे त्यो सरकारी हवस् या गैरसरकारी। खरबुजाले खबुरजालाई देखेर रंग पकड्छ, यदि निर्णय किन-बेचको वस्तु बन्छ भने, आत्म विश्वासको महत्व समाप्त हुन जान्छ। कहावत छ "You can't be fool all people in all time"

हाम्रो इतिहास साक्षी छ कि हाम्रा कार्य आध्यात्मिक थिए। आज भौतिकवादले हामीलाई यति प्रभावित पारेको छ कि हाम्रो साधन साध्य बनेको छ। व्यक्तिले त्यस शिक्षा संस्कृतिलाई ग्रहण गर्नु पर्दछ कि जुन मानवीय ज्योतिलाई भिन्न सहायक हुन्छ। विभिन्न व्यक्ति-

हरूको हित अर्काको बिरोधी हुँदैनन् भन्नु युक्ति युक्त छैन, तर यो आवश्यक हुन्छ कि प्रत्येक मनुष्य अर्काको हितलाई सम्झन सकोस्। यदि यो सत्य हुँदो हो आज समाजको चित्रपट विभिन्न कार्यहरूको बीचमा रहने खाईहरू, हँसी, रुदन, तेरो-मेरो, ठूलो, सानो, एकतामा अनेकता, अमीर-गरीब र जातीयताबाट, विजातियता देखाइदिने थिएन। त्यसैले यो ठोकेर भन्न सकिन्छ कि नैतिकताको मापदण्डहो मानव जातिको रक्षामा सहायक हुनु। अतः त्यो नै आचरण नैतिक हो जुन मनुष्यको व्यक्तिगत तथा सामूहिक जीवन दीर्घ, व्यापक पूर्ण र आदर्श प्राप्तिको निमित्त अविराम गतिले बढ़ी राखेको होस्।

मानिसका दुइटा पहलु छन्—साधारण मनुष्य र व्यक्तिगत विकास समाजको वास्तविक स्वरूप र मानिस-मानिसको सम्बन्धको विकासमा पनि हुनु आवश्यक हुन्छ। यति मात्र हाम्रै आज हुने पनि देश आफै रक्षाको निमित्त पनि पूर्ण छ भन्न गाहारो हुन देखिन थालेको छ, यसैले स्पष्ट छ आतङ्कको समाज छैन। साथै यो सम्भव छैन कि सारा आवश्यकताको पूर्ति स्वतन्त्रता पूर्वक आफ्नो पूरा स्वार्थ लिएर गर्न सकियोस्। अफ्रिकी एक दार्शनिकको भनाई छ कि—"जब सम्म मनुष्य जात विभाजित छ र मानिस हरु पशुको जस्तै व्यवहार गर्छन्, तबसम्म कुनै पनि वैज्ञानिक अथवा सामाजिक प्रगति गर्नु निरर्थक छ"।

प० ४ नं० सतौं



# पञ्चायती दर्शन—

—पं० ज्ञानेश्वर शास्त्री

आफ्नै देश सुहाउँदो गहकिलो राम्रो व्यवस्था नभै,
बढ्ने छैन अगाड़ि देश तल नै झर्ने अवस्था छ है,
बढ्दो यो जन भावना प्रतिसदा सोंची विचारीकन,
बक्सेको छ नरेशबाट जनमा पञ्चायती दर्शन,

( १ )

यो हो शुद्ध र स्वच्छ दर्शन यहाँ कौनै कुराको पनि,
देख्दैनौं त्रुटि सत्यको छ सुकिलो ज्योती प्रसस्तै अनि,
यसलाई अधिराज्यबासीहरुले सारै रूचाईकन,
राख्नेछन् पछिसम्म उक्लन उभा यस्मा लगाई श्रम,

( २ )

इर्ष्या लोभ र मोह कायरपना, त्यागी सबै दुगुण,
श्रद्धा प्रेम र मेल धैर्य जति छन, दैवी लिई सद्गुण,
श्रद्धा राष्ट्र र राष्ट्रनायक प्रति बढ्ने सुशिक्षा पनि,
यस्द्वारा जनले अवश्य पनि लौ पाई हुनेछन् धनी,

( ३ )

निःस्वार्थी अनि साहसी र मतिमान् औ शक्तिशालीनिकै,
जन्माई प्रहरी बनी मुलुकको साफल्य पाओस् छिटै,

आकांक्षा जब देशको दृढतया गर्ने छ पूरा यहाँ,
त्यस्बेला अधिराज्यको यश सदा बढ्नेछ संसारमा,

रिड़ी प्रधान सं० पाठशाला, (गुल्मी).

## उद्देश्य—

—चन्द्रकान्त आचार्य

उद्देश्य हो एक बाटो लक्ष्यसम्म पुऱ्याउने।
बाँच्नेको हुन्छ उद्देश्य आशा जीवन ल्याउने।
के उद्देश्यबिना कोही भए सफल नायक ?।
के उद्देश्य कुनै यौटा वस्तु होइन लायक ?।
अनूद्देश्य भित्र हुन्छ गरिबी गहिरो व्यथा।
साना-ठूला सबैभित्र, रहन्छ यसको कथा।
संसार काँप्छ उद्देश्य-अगाड़ि हेर बन्धु हो ?।
सर्वगण्य सर्वमान्य उद्देश्य एक वस्तु हो।
उद्देश्य यदि हुँदो हो दोषयुक्त कुनै चिज।
फैलिन्थ्यो कसरी सृष्टि यो सानो विधिको बीज ?
उद्देश्यका भई अज्ञ बन्दैनन् कोही नायक।
रहन्छ तिनमा आशा भविष्य-सुखदायक।
उद्देश्यको साथ बस्ने उत्साह एक भाइ हो।
विपत्तिको सेखी झार्ने यो यौटा मूल मन्त्र हो।

बाङ्ला आदित्य पुर (गुल्मी)

# मेरा गीत तिम्रै हुन् शारदा !

—कोपिलो

दुःखको अँध्यारो दुर्दिनमा–
असह्य वेदनाले तिम्रा आँखाबाट
खसेका ती जलकण—
मैले बटुल्याएँ,
स्वर दिएँ,
लय दिएँ,
र—
आज तिम्रै जन्म दिनमा
गाउँदै छु
यसलाई स्वीकार गर शारदा !
यी तिम्रै हुन्।
विछोडको विरह वेदनामा
करर मुटु खाई
तिम्रो दिलबाट निस्केका ती
निश्वास—
मैले जोरे, झंका दिएँ,
स्पन्दन दिएँ
र —
आज तिम्रै प्रणय बन्धनमा
बजाउँदै छु
यसलाई पसन्द गर शारदा !
यी तिम्रै हुन्।
एक लोस जीवन-पथको
निरस सफरमा
तिम्रो कल्पनाको त्यो
अधूरो चित्र
मैले जीवनमा उतारें
रंग भरें
पुरा गरें
र—
आज तिम्रै लासका साथ
यसलाई जलाउँदै छु
यी उठेका ज्वाला
यसैका हुन्।

( वाराणसी )

## प्रवासीलाई—

—श्री यादवनाथ शर्मा "आत्रेय"
न० व्या० शा० शास्त्री अन्तिम वर्ष

काशीवासी खूसिछन् ती प्रवासी,
हाँसी हाँसी चित्तराखी उदासी
चल्छन् खेल्छन् डुल्दछन् ती सहर्मा,
पढ्छन् बढ्छन् खेल्दछन् एक छिन्मा ॥१॥
राम्रो हाम्रो भावि देशको विचार,
तन्मा मन्मा राख्ने कस्तो अपार
यस्ता सस्ता छन्प्रवासी ती कस्ता
मानू सानु बालिका गोपि जस्ता ॥२॥
पर्को थर्को नामराखी इच्यल्ले,
अर्को सर्को सर्कनु पर्छ मैले
यस्तो सस्तो मूल्यवान् चित्तपारी,
देशको शेषको पाछु सुन्दर म वारी ॥३॥
गन्या मान्या हुन्नन् कैल्यै नजान्ने,
हेला बेला पार्दछन् फेरि जान्ने
सारा भारहेरूले घेरिएका,
एता उता छन्प्रवासी फिरेका ॥४॥
आउ आउ देशलाई समाऊ,
सुख्ले दुख्ले चित्तलाई बुझाऊ
आफ्नाघर्को रोटि पीठो लिएर,
भन्ने लेखकको छ यस्तो विचार ॥५॥
—खिदिम पोखराथोक (गुल्मी)

# शक्ति

—टीकाराम पन्थी ( नव्यव्याकरणाचार्य )—

समस्त विश्व प्रत्यक्ष तथा परोक्ष-रूपमा एक विलक्षण शक्तिद्वारा संचालित छ। भारतीय षट्दर्शनको मूलभूत वेदान्तदर्शन, जसले ब्रह्म-देखि भिन्न सब पदार्थलाई भ्रमात्मक मान्दछ, त्यसको भनाई छ कि स्वयं प्रकाश आत्मालाई ढाक्ने मायाका दुइ शक्ति हुन्छन्– १ "आवरण शक्ति," यसले आत्माको स्वरूप बादलले सूर्यलाई ढाके झैं ढाक्दछ; २ "विक्षेपशक्ति"-यसले डोरीमा सर्पको भ्रान्ति भए झैं सत्य, ब्रह्ममा असत्य नाम रूपात्मक जगत्को भान पार्छ। शक्ति उत्पादक, प्रतिबन्धक र उत्तेजक रूपले चेतन तथा अचेतनमा रही संसारमा विभिन्न खेल देखाउने एक नटी हो।

चेतन-शक्ति मनुष्यको मानसिक-शक्ति हो। मनुष्य पूरा शक्तिको साथ जन्मन्छ, बाल-शरीर बढ्दै जाँदा क्रमशः शारीरिक-शक्ति बढ्दै गएझैं मानसिक-शक्ति पुष्ट हुँदै जान्छ। शरीरको पुष्ट्याईं र शक्ति, जल-वायु र भोजनमा निर्भर हुन्छ। आन्तरिक-शक्तिको सर्वप्रथम आश्रय उसका बाबु-आमा या उस जातिको भावना र प्रतिभा हो, त्यसपछिका बाहिरी सामग्री हुन्। बाहिरी सामग्रीहरूमा अवस्था भेदले, —जस्तै भिजाएको पिप्पलीमा कफजनन-शक्ति सुकेकोमा त्रिदोष-

शमन-शक्ति कुनै अवस्थामा धानका बीजमा अङ्कुर पैदा गर्ने शक्ति हुनु, मूसाले सुँघेकामा नहुनु। देशको भेदले हिमालयको चीसो पानी धेरै टाढ़ा पुगेर (वाराणसी आदि ठाऊँमा) तातो हुन्छ। एवं अन्तः सामग्री र बाह्य-सामग्रीले मनुष्यको बुद्धि-गत शक्तिलाई प्रभावित गरिरहन्छन्। प्रत्येक शक्तिका उत्तेजक तथा प्रतिबन्धक पदार्थ हुन्छन्—अग्निको जलाउने शक्ति रोक्ने चन्द्रकान्त मणि र त्यसलाई उत्तेजित गर्ने सूर्य-कान्त मणिझैं। एवं मानवीय अन्तःशक्तिको ह्रास र वृद्धि उत्तेजक तथा प्रतिबन्धक शक्तिमा निर्भर छ।

प्रत्येक अचेतन पदार्थमा विचित्र शक्ति हुन्छ। आधुनिक विज्ञानको धारा चेतन-शक्तिले परिचयद्वारा सत्य सिद्ध गरी प्रयोग गरिएका अचेतन-शक्तिको परिणाम हो। यीनै दुइ शक्तिको संघर्षबाट विश्वको सबै काम अविरल रूपले चलेको छ, सानो ठूलो भन्ने भेदभाव छैन—गोठाला-का हातको दण्ड-शक्तिले परस्पर जुध्ने र खेतीमा पस्ने कुप्रवृत्तिदेखि हटाउँदै गाईको रक्षा गर्छ। सरकारका हातको कोष-शक्तिले देशका औद्योगिक उन्नति र दण्डशक्तिले परस्परमा मुद्दा गर्ने र अर्काको धन मालमा हात पसार्ने आदि कु-वृत्तिबाट हटाउँदै प्रजाको रक्षा गर्छ।

परन्तु चेतन-शक्ति या प्रयोजक-शक्ति स्वच्छ, कुशल, सक्रिय हुनु पर्दछ। यदि गोठालाको दण्ड-शक्तिले अकुशल भएर निरपराध गाईलाई मार्‍यो वा सरकारको दण्ड-शक्तिले अकुशल भएर निरपराध प्रजालाई पीडा गर्‍यो भने शक्तिको दुरुपयोगको साथ-साथै प्रयोजकको नै ठूलो

हानि हुने संभावना हुन्छ तथा चेतना-शक्ति स्वच्छ औ कुशल छँदा छँदै पनि निष्क्रिय भयो भने यस किसिमले नष्ट हुन्छ जस्तै—कुनै मयूर आदि-का फूलभित्र प्रत्येक अङ्गका अवयव बनेर ठीकठाक भए पनि कुनै प्रतिबन्धद्वारा बाहिर निस्कन नसकेको बच्चा उहीं सड़ेर जान्छ। एक उदाहरण-आजभन्दा २२,०० वर्ष पहिले (ई०पू० दोस्रो शताब्दी) महर्षि पतञ्जलिद्वारा ( स्थानेऽन्तरतमः, पा. सू. ) मा वैज्ञानिक सिद्धान्त सजातीयाऽऽकर्षण-शक्ति देखाइएको छ।

अचेतनेष्वपि लोष्ठः क्षिप्तो बाहु-वेगं गत्वा नैव तिर्यग्गच्छति नोर्ध्वमा-रोहति पृथिवीविकारः पृथिवीमेव गच्छत्यान्तर्यतः, तथा या एता आन्तरिक्ष्यः सूक्ष्मा आपस्तासां विकारो धूमः स आकाशे निवाते नैव तिर्यग्गच्छति नावाग्वरोहति, अविकारोऽप एव गच्छत्यान्तर्यतः। तथा ज्योतिषो विकारोऽर्चिः, आकाश-देशे निवाते सुप्रज्ज्वलितं नैव तिर्यग्गच्छति नावाग्वरोहति, ज्योतिषो विकारो ज्योतिरेव गच्छत्यान्तर्यतः।

" [ लोष्ठ ( ढुङ्गा मटेङ्ग्रो आदि ) आकाशपट्टि फ्याकिएको हात-को वेगसम्म पुगि न त्यसभन्दा माथितिर जान्छ, न त तेर्सो जान्छ परन्तु सोझै पृथ्वीमा झर्छ। आकाशमा सूक्ष्म समुद्र छ, धुवाँ पानिको विकार हो ( काठ आदि चीसा भएमात्र धुवाँ निक्लन्छ ) पृथ्वीबाट उड़ेको धुवाँ हावा नचलेको समयमा तेर्सो र उँधोतिर नगईकन सोझै आकाशीय समुद्रमा मिल्न उँधोपछि जान्छ। आगाको ज्वाला आकाशमा हावा नचलेको समयमा न तेर्सो चल्दछ, न तलपछि ओह्रन्छ, किन्तु तेजको विकार हुनाले तेजमा ( सूर्यमा ) मिल्न सोझै माथिपट्टि चल्दछ। यस

किसिमले पृथ्वी, जल र तेज आदि जड़ पदार्थमा पनि आ-आफ्नो जातिलाई खींचेर आफुमा मिलाउने शक्ति छ। ]

परन्तु आज यस सिद्धान्तको आविष्कर्ता को थियो ? भनेर सोध्ने हो भने जहाँ तहाँ 'न्यूटन' ( सर आइजक न्यूटना सत्रौं शताब्दीका प्रसिद्ध वैज्ञानिक ) भन्न पाइन्छ। १६,०० वर्षसम्म न्यूटनका जस्तो शक्ति भएको विद्वान् नहुनु आश्चर्य हो वा उपेक्षावाद हो। यदि प्रत्येक जन आफ्नो अन्तः शक्तिको सदुपयोग गर्दो हुन् त के हुन सक्ने थिएन र ?

—भाडगाउँ ( गुल्मी )



# कस्तो ! कस्तो !! दिन

—लेखनाथ ज्ञवाली—

त्यो एकान्त र शान्त स्वच्छ प्रकृति कालो बनेको दिन,
भित्री तत्व हराई शून्य मनले 'मौनी' बनेको दिन।
टक्का हात परे अबोध जनको ज्यानै गुमेको दिन,
खप्नु हाय ! कसोरी दुष्ट दुनियाँ 'धर्मी' बनेको दिन ॥ १ ॥

भाइ-बैनी मिलेर पाठ सजिलो लेख्ने र पढ्ने दिन,
आशे संपतिमा अबोध बिचरी नारी कसैको हुन।
त्यो दाम्पत्य-कथा पवित्र मनले सोच्नै नसक्ने दिन,
रुन्थिन् तै पनि हाय ! केहि नबुझी डोली चढेको दिन ॥ २ ॥

यो आफ्नो पति हो न वा अरु कुनै होला छिमेकी जन
भन्नेसम्म पनि नजानी घरको धन्दा गरेको दिन।
झस्केको पतिले तथापि बिचरी गल्ती भएको दिन;
संझी माइतीलाई हाय ! कसरी खप्दीहुनिन् त्यो दिन ॥ ३ ॥

रोई-रोई जलेर आत्म बिचरी दुब्ली बनेको दिन,
लाखौं कष्ट सहेर क्यै गरि मुट्ठ थामी बसेको दिन।
तृष्णा तल्तल त्यो छ वृद्ध पतिले लोभी बनेको दिन,
ढुङ्गो रुन्छ सुनी कहानी बिचरी खप्दीहुनिन् के दिन ? ॥ ४ ॥

सेवा लाख गरिन् परन्तु पतिले छोडीदिएको दिन,
फुल्ने त्यो दिनमा कहै ! ती अबला एक्ली बनेको दिन ।
यौटै जीवनको सहाय, भनिदो झिक्को ढलेको दिन,
खप्दीहुन् कसरी ? स्वयं ती बिचरी स्यूँदो पुछेको दिन ॥ ५ ॥

लुच्चा मानवका अगण्य घटना कल्पीरहेको दिन,
पानीसम्म दिने कलत्र, उनको आशा लुकेको दिन ।
यस्कै निष्ठुर छातिमा तर पनि दोषी सुझेको दिन,
खप्दीहुन् अबला तो हाय ! कसरी छाति पिटेको दिन ॥ ६ ॥

नौलो पश्चिमी भेषको चहलले जिस्क्याइएको दिन,
एक्लो जीवनमा निराश्रय भई तड्पीरहेको दिन ।
साराका नव-दम्पती संगसंगै बाटो हिड़ेको दिन,
खप्दिहुन् कसरी तरक्क बिचरी आँसु खसेको दिन ॥ ७ ॥

—बोहा ( गुल्मी )



# मानव कहिले बन्ला ?

—कलाधर गौतम—

जुन जन तन आफ्नो देशको निति देला
सकल जगत उसको कार्यले मुग्ध होला,
नर-गण सब उसको स्थान छोड़िदिनेछ,
अनि, पछि दुनियाँले नाम उसको लिनेछ ।

तन, मन, धन देला हर्षका साथ जैले,
सब भुवन झुकाई विश्वमा शान्ति छर्ला,
जब-जब सब बन्धु प्रेमले रङ्गिने छन्,
तब पछि उसलाई साथीले सङ्दिनेछन् ।

तँ तँ तँ र ममताको भाव जैले छड़ेर,
सहज कहन सक्ला एकता भइ-नारा
मिलि-जुली जब पैले बन्धुको ग्रन्थि पर्ला,
तब पछि उसको नै विश्व सब लाग्न लाम्ला ।

तँ छ तल, म छु माथि, माननु पर्छ खूब,
तँ मलीन, म छु राम्रो, मैं धनी, तैं गरीब,
जब इनी ममताका भाव हुत्त्याउने छ,
तब, "मनुज" स्वयं नै नाम-त्यो संझने छ ।

गुल्मी खिदीम (डढुवा)

★

# यो नदीको भेल

—पशुपति ज्ञवाली—

यो नदीको भेल
भर्खरै तल थियो,
कसरी बढ्यो
केले उन्मत्त भएर माथि उर्ल्यो ?

पुग्यो माथि,
शिखरमा पुग्यो
तत्काल फोकाहरू फुटे
ओल्यास्त पर्‍यो, तल झर्‍यो,—
शान्त भयो ।

यसरी नै उठ्दछ, बढ्दछ,
फेरि शिथिल भएर जान्छ
भय-भीत हुन्छ, छट्पटाउन लाग्दछ
कहाँबाट उर्‍यो ? किन बस्यो ? अज्ञात छ
त्यहीं नै निस्क्यो, त्यहीं नै विलीन भयो;
यो नदीको भेल.........।

— गेहाँ धर्मपोखरा ( गुल्मी )



# भीख माग्ने दाजू !

—कृष्णप्रसाद खनाल—

ए जोगी ! छोडियौ अब, भीख माग्ने साँधुको औतार !
तास-बिडी सोह्रभाई पैले जमाएरं,
छाति पिटी संपत्तिको खोलो बगाएर,
हात-मुख मिलाउन गास हराएर,
साधु बनी घुम्न थाल्यौ भस्म लगाएर,
देखेर यो तिम्रो चाल दङ्ग परी गल्कन्छ संसार !
भीख मागी कमाएर सँगिनीलाई चोली—
क्निनलाई, भिनु किन ? मरि-मरी झोली,
गाउँ-घर छोरा-छोरी आँसु पिई मर्छन्,
साधु बनी अझै तिमी तपस्वी भै घुम्छौ, देखेर·······
भीख माग्न छोड़िहाल फ्याँकिदेऊ झोली,
घर्की रुने सन्ततिको आँसु पुछिदेऊ,
कोदालीलाई काँध राखी हँसियालाई भिर
"काम गरे माम मिल्छ" आऊ यतै तिर,
देखेर यो तिम्रो चाल दङ्ग परी गल्कन्छ संसार !

अर्घातोस धर्मपान्नी ( गुल्मी )

## दोधार

— ओमप्रसाद गौतम —

अन्धकार कुहिरोको बीचमा
जीवन र मरणको साँधमा
जीउनु र मनु को हाँसोमा—
तै पनि म
दोधारमा छु, साथी ! अन्धकारमा छु ।
कुहिरोको बीचमा शंकालुनयन
अविरल गीतमा दौड़ाउँछु
प—र क्षितिजको एक सहार
क्रमशः विलीन भएको देख्दछु;
बेवारिसी झैँ
न घरको न घाटको झैँ
बीच कुहिरोमा छु, साथी !
तै पनि
सफा रोशनीको प्रतीक्षामा छु ।

खिदीम चिदिपानी ( गुल्मी )



# अपढ़ रह्यौ जीवन भरको

—कुमारी लक्ष्मीदेवी पराजुली ( प्राइमरी कक्षा )

धन्य हो, तिम्रो जीवन हाय ! विदेश रहेर
अर्काको नून पालना गर्छौं सहर्ष भएर।

कैलेको वर्षा कैलेको शीत सिरिरी बतास
चलेर सारा, कमाई देह रहेर अतास।
हेमन्त-ऋतु-असह्य ठण्डी, लाठीको भरमा
नसुती कठै !! कसरी सक्छौ ? अँधेरी रातमा। धन्य हो....

शिरमा फेटा हातमा लाठी पत्लून खागीको,
बिड़ीको मुठो मुखमा ठुटो त्यो थांग्रे कोटको,
गोजीमा हात लाठी छ साथ नींदले विचेत,
बन्दछौ कठै !! रहेर खड़ा अनि 'छौ' सचेत। धन्य हो...

'लिपनौ शिक्षा' पर्छ कि दुःख भनेर मौकामा,
छलेर हिंड्यौ तासर जुवा खेलंदै रातमा।
मानेनौ माता-पिताको आज्ञा ऐले छौ विदेशी,
बिहोसी बन्यौ स्वदेश ढल्यौ रहेर अयेशी। धन्य हो....

न अरु कुनै विशिष्ट काम, गरेर जीवन,
बिताई घर बनायौ ढ़, अनेक महन,

गरेर बस्यौ दिएर दुःख संझना घरको,
गरेनौ दाजू ? अपढ़ रह्यौ जीवन भरको । धन्य हो....

ए दाजू ? लियौ पुरुष-जन्म नारीझैं भएर,
अर्काको आशा गर्दछौ हाय ! विदेश रहेर ।
उद्योगी जन्म पाएनौ कठै !! वंशमा संझना.
कसरी होला ? घरमा रहे बान्धव पालना । धन्य हो....

स्वदेश छाडी बिदेशी भयौ पराइ-छोरीको,
संझना किन ? मारेको दाजू ?, जीवन तोरीको,
फूल झैं भयो मौरीले रस चोरेर लैजाला,
बिचार गर नपर भर बिग्रेर गैजाला । धन्य हो ....

अर्गली रनुवा ( पाल्पा )



# मेरो जीवनमा

—ध्रुव भट्टराई—

म एकाएक झस्कें
मेरो मन ढक्क भयो
मेरा यी दुवै गोडा लगलग्ती काम्न थाले।
घोसे मन्टो लगाएर हिड्केको म
एकाएक चारैतिर हेरें,
मैले केहि देखिन
अनि म दुई-चार कदम अगाडि बढें
फेरि टक्क रोकिएँ।
स्वच्छ आकाशमा
बादलको कालो पर्दा एकाएक लाग्यो
कसैको जीवनको वास्ता नराखी
कसैका कल्कलाउँदा बालक आदिको परवाह न गरेर
तुफानी बतास साथमा पानी
एकै साथमा आयो
त्यसैले बल्ल म! आत्तिएँ, तर्सिएँ, झस्कें,
मलाई लाग्यो यो स्वप्न त होइन!
यो विजन स्थान

यो वनको प्राकृतिक कालिमा
यो बाघ-भालुको भीषण गर्जन
त्यसैमा यो भीषण बादलको गर्जन
झन् त्यसमा तुफानी बतास साथमा पानी
यो उक्कालो लामो बाटो
यो साँझको बेला।
म एक्लै छु;
यहाँ मेरो कोहि सहारा छैन;
मेरो मनले पनि भन्यो "अब तेरो कोहि सहारा छैन।"
ए ईश्वर !
मेरो यो अन्त्यावस्थामा
मलाई एकपटक हाँस्न दे।
यो मेरो मनको बत्ति –
बाल्ने मलाई चान्स दे।
अतीतका कुरा संझने मलाई मौका दे।
अनि म हाँसी हाँसी तेरो साथमा आउनेछु
मेरा अन्तिम पुकार एकबार सुनि दे।
एक बार मलाई चान्स दे।

वाङ्ला ( गुल्मी )

★

# आजका मानव

श्यामबहादुर राणा 'निर्मोही'

आजका मानव,

मानव हैनन्, मानव आवरणमा छिपेका दानव हुन्। जो समाजलाई, देशलाई धोखा दिई दिनको उज्यालोमा मानवको आवरण र रातको अँध्यारोमा दानवको आवरण लिएर घुम्दछन्।

अरे! यिनै देशका कर्णधार समाजमा शान्तिको वातावरण उपस्थित गर्नेछन्।

यिनै देश-भक्त आफ्नो देशको लागि ज्यान दिएर भए पनि देश-भक्त हुँ भन्ने सबूत दिनेछन्?।

यिनै समाजका नेता समाजमा, देशमा, जाति-धर्ममा, सभ्यता, संस्कृतिमा उन्नति गर्ने छन्?।

यी हैनन् देशका कर्णधार, हैनन् यो देशभक्त र हैनन् यी समाजका नेता। किन्तु यी हुन् रातको अँध्यारोमा नग्न-नृत्य गर्ने दानव।

यी रातको अँध्यारोमा आफ्नो झूठो दिलको तृप्तिकोलागि मात्रै नारीको सौदर्न्य र सबभन्दा कोमल वस्तु नारीत्वलाई मिटाउन सिपालु छन्।

आजका कर्णधार आजका देश-भक्त, आजका नेता आफ्नो संस्कृति सभ्यतालाई त्यागी पश्चिमी देशको वेढङ्गी रूपले अनुसरण गरी समाजमा यस्तो वातावरण उपस्थित गरिदिए कि—पुरुष त पुरुष, नारीको पनि अस्तित्वलाई पल्टा खन्नाए।

आजका सभ्य भनाउदा मानव, मिलेर नारी जातिको वास्तविक दलन समुचितरूपले न हटाएर बाहिर-बाहिर वेढङ्गी चालले अलि-अलि राम्रो आभा झल्काउन खोज्ने तर भित्र छड्के परेर क्रूरता घुसेको अपूर्व मनाउदो अधिकार ल्याएर जुँगामा ताउ लगाउन तम्सिन्छन्।

समाजमा प्रतिदिन तेसै उन्नति गर्न तम्सेर पनि वास्तविक रूपले आफ्नो कर्तव्य चुकाउन तम्सन सक्देनन्—आजका मानव !।

—नेपालगञ्ज—



# रोएको जीवनं

—रमानाथ पन्थी—

हे अबलाका आधार ! यो जन-जीवन सपार,
सुकेको आत्मा जलाउने समाज आफ्नो सुधार।
जसले छोरी जन्मायो सम्पत्ति उसले उब्जायो,
मानव साह्रै बौलायो छोरीको मोल हजार !
कस्तो छ हेर ! उद्गार।
आफ्नो–काख जन्मेकी प्रेमले सानी हुर्केकी,
हाय ! ती बाला बेचेर थैला कमाउने हजार
मानवको यो आचार।
तातो–आँसु पिएर बिरहले जलेर,
घर्मी आफ्नो बाबुको वक्ष थामीरहेछन्
कल्पी रोईरहेछन्।
एक—उदरको आत्मालाई बन्धनदेखि फुस्काऊ,
मानव—आत्मा बिक्ाउने बजारलाई लत्याऊ।
खुंचेको फूल फक्राऊ।
ती अबलाको आँसुलाई सहाय बनी थामिद्यौ,
शिक्षाको जरा टेक्काइद्यौ जीवनका हे आधार !
देखेर मायाँ नमार।
हे अबलाका आधार ! यो जन-जीवन सपार,
एक्लो आत्मा धकेल्ने समाज आफ्नो सुधार।

खाँची अंडगुरी दम'र (गुल्मी)

# अर्को घर जान चाहन्छु

—देवीप्रसाद शर्मा—

म सोचीराखेको थिएँ आज संम
नराम्राको भन्दा राम्राको भित्र
निकै राम्रो बत्ती बल्दो हो
तर, विस्तारै-विस्तारै
म सिच्छिदै आएको छु,
नराम्राको लेखि त राम्राको शून्नी !!
भित्र बत्ती बल्दो रहेन छ ।
क्षण-क्षणमा नराम्राको बत्तीको उज्यालोमा
आफ्नो बाटो देख्न चाहन्छु,
आफ्नो अन्तःकरणमा एक पटक पनि
बल्दै नबलेको बत्ती सल्काउन खोज्दछु;
परन्तु राम्रो सल्काई दिन पर्‍यो भने
सा—है चिढ़िन्छ ।
राम्रो भन्दा नराम्रो विशेक छ
तर, खलपत्र धुँआ रहित
बत्ती बालेर, मेरो पनि हृदयको पत्रमा,
माथि भने जस्तो बत्ती सल्काईदिन,
दुःख मानिहाल्दछ;
यसै उसले दिक्क छु
म अर्को घर जान चाहन्छु ।

—थोर्गा कमेरेडाँडा ( गुल्मी )



# संबूत

—भुवनेश्वर शर्मा—

मैले आफुलाई धोखा दिएकै हुन पर्छ
नत्र भने,
यो विशाल जगत्मा
चारैतिरको मैदान र पहाड़मा
जलमा नभए पनि यत्रो जगत्मा,
म आफुलाई धोखा न दिएको भए
मित्र-द्रोही आततायीलाई पुगेको स्थान
मलाई पनि पुग्न पर्थ्यो
वास नभएको बटुवा झैं,
वृषोत्सर्गमा छोड़ेको बसाहा झैं
हूरीले उड़ाएको अग्लो रुखको ,गुँड़ .
सिरठीसेकेको सावकलाई
आफ्नो पाँखले बचाउन तड्पिएको पक्षी झैं
पहाडको स्वच्छन्द झरनाबाट--
बहेको निर्मल जल एकत्रित कुवामा
स्वच्छ विहार गर्ने माछालाई
निर्दयी माझीले झिकेर विशाल बगरमा

पछारेको माछो झैं
आफ्नै प्रश्वासले पनपिएको म
हृदयको दाहाले दन्केको म,
मनको चिराकले डढेको म,
सापले काँचुली झैं
दुनियाँले त्यागिएको म
केही काम पनि नरहेको म न भए
मैले आफुलाई धोखा नदिएको भए,
नील आकाशको छहारीमा
नअटाए पनि
हृदयको केन्द्र-बिन्दुमा त
मेरो स्थान अवश्य हुनुपर्थ्यो
यो स्थान नहुनु नै
यसको यथेष्ट प्रमाण हो,
यसको सबूत हो कि
मैले आफुलाई धोखा दिएकै हुनुपर्छ।

—सतौं उनियाचौर, गैह्री जाँगर ( प० ने० ४)

# स्थान मिल्दैन आज

—माधवप्रसाद शर्मा, पत्री—

निशि जति अति धेरै शोकले प्राण नाशी—
सकल अकल सोच्दै पानीको भै पिपासी,
वनबिच रहने त्यो कोइली झैँ छु हाय !
ग घर-घर गई हेरेँ "स्थान मिल्दैन आज" ॥ १ ॥

अचल चलन सारा देखँदामा सबैको,
मन कुमन हुँदैगो दुःखले घेरिएको ।
न छु घृणित तथापि छैन कोही सहाय—
णि श्रम विफल हुनेभो "स्थान मिल्दैन आज" ॥ २ ॥

फल सुफल भएका वृक्ष राम्रा लगाई—
कनक कलशमाथि पुष्प राखी सजाई,
भ्रमर-गति म रोकेँ प्राणको भै सहाय,
त श्रम सतत गर्थेँ "स्थान मिल्दैन आज" ॥ ३ ॥

सुमधुर मधुको त्यो वासनामा रहेर—
सुकुसुम कलिकाको कान्ति सारा भुलेर,
भवन वन बनाई प्राणको भै सहाय
न श्रम सतत गर्थेँ "स्थान मिल्दैन आज" ॥ ४ ॥

युग सरि वन ऐले पर्न सक्दैन बाधा,
मन चपल बढाई गर्न उद्योग जाँदा।
समय-गति थुमेकै हुन्छ "राखेर ख्याल"—
हुँ अघि बढ अब भाइ ! "स्थान मिल्दैन आज" ॥५॥

दिनकर- करको त्यों प्रेमले पाई शोभा
स्मरण भुली सँगीको व्यस्त भै मस्त बन्दा।
सब अरि-दल मैले ध्वस्त पारेर हाय !
दा भ्रमर रस लुटेथें "स्थान मिल्दैन आज" ॥ ६ ॥

अर्गलीरनुआ ( पाल्पा )

# गजुँरा डाँडाको जीवन

—विश्वनाथ पन्थी—

गोरेटो जस्तो उकालो बाटो गजुँरा डाँडामा,
पुसको महीना देखाउने ऐना, ज्यान जाने जाड़ामा।
त्यसैको पुछार 'भाडगाउँ' सानो थपक्क बसेको,
पहाडि-गाना गजुँरामाथि घन्कने मजाको॥
भोटेले पाखी ल्याएन भन्दै गाउँले बसेका,
आएर भोटे भन्दछ "बाजे! सुन्तला खसेका।
गाउँ-घरको जीवन दाउरा र घाँस गरेर बसेका,
गाई, भैंसी पाल्न मग्न भै सबै कम्मर कसेका॥
कपालमा मेत्रो कम्मरमा नाम्लो बाँधेर ढ़ल्कने,
बोलीका मीठा कल्कला ठिटी मस्त छन् वैसले।
खुर्पेटो-नाम्लो कम्मरमा भिरी रमाइलो गरेर,
मर्खरका ठिटा, ठिटीलाई देख्दा हिड्दछन् चम्केर॥
आँखामा गाजल, कोखामा मादल भिरेर बजाउने,
सज्जन मान्छे देखेर तिनी किन हो लजाउने?।
साँझको वेला ठिटा र ठिटी मिलेर गीत गाउँदै,
गाईको ताँती लगाई आउँछन् घरमा रमाउँदै॥

तमघास, लदमीपुर

*

# अनुभव

—रघुनाथ शर्मा—

घरिं-घरि चीत परी म लड्दछु,
देखी अनौंठा तिमीलाई दयालु।
तिमी भने व्यर्थ भई रहन्छौ,
झटक्क देखाई चटक्क छोड्दछौ॥

कति भने पारि पुगीसकेका,
कति भने वारि बसीरहेका।
कति भने चट्ट परीरहेका;
कति भने आशागरी बसेका॥

देखाई आशा सबमा निरन्तर,
लगीरहेछौं पथमा बराबर।
परन्तु तिम्रो हलुका विचारमा,
चटक्क छोड़ेर गयौ कतातिर॥

कसै-कसैलाई सबै दिएछौ,
कसै-कसैलाई हेरीरहेछौं।
ती हेर्नें मान्छिसहरूको जीवात्मा,
आशा गरी बस्छ बनै समान॥

कोही कसैमा कटुता भए पनि,
पुगीसकेका पथमा शनैः शनैः।
कहिँ कसैमा नम्रता भए पनि,
झुलीरहेका बीचमा त व्यस्त भै ॥

कति भने जोगी बँनी घुमेका,
शोषक बनी कोहि कतै बसेका।
कति कसेका सूट, बूट, पैण्ट;
कन्था भिरेका कतिछन् उदेक॥

ती बिचरा व्यर्थ भई बसेका,
नपाई क्यै लक्ष्य उदासिएका।
सुल्टो जीवनमा स्थिति क्यै उल्टद्रा,
कहाँ थियो त्यो जगतै भरिमा॥

गराई बीचमा अति खिन्न त्यो मन,
बिचारमा रङ्गमङ्गिदै बसेँ म।
कठै-बरै त्यो सपना-भए पनि,
उत्साहिलो जोस उदाउने छ नि।

शनैः शनैः रात्रि पनि फिजारिई,
निद्रापनि सुटु छिपेर आइछन्।
भएन जान्छु अब विस्तरानिर,
भन्दै गयो त्यो दुःखमा डुबेर॥

उषा पनि झट्ट यहाँ उदाइछन्,
निद्रा मलाई छली झट्ट भागिछन्।
आशा रह्यो त्यो सब जिन्दगीको,
कहाँ थियो को बिचरा दुःखीको ?

आशा हरायो पुर्पुरो समायो,
धिक्कार दियो जीवनै भरिको।
निकै अमीलो बनी आँसु झार्‍यो,
त्यस्तै गरी जिन्दगी हा ! बितायो। —गुल्मी बल्कोट (गुठी)



## जीवन कथा

—हमाल—

सुनाऊँ के कथा तिमीलाई ? जीवनमा बितेको मेरो
देखाऊँ के हृदय खोली व्यथा ? त्यहाँ छ अति गहीरो, सुनाऊँ....।
सजाउँला जीवन भन्थे, सुखैको त्यो कहानीले
रोईरहनु छ, भाग्यमा लेखिएको लहर मेरो, सुनाऊँ....।
सफलता त्यो मदेखि हाय ! सदा दूर-दूर हुन गो
आशाको त्यो सुन्दर सपना आज चूर-चूर हुनगो, सुनाऊँ....।
सुनौला त्यो सुन्दर सपना, साँचै होस् म भन्थें
रहिगो दिलको यो धड्कन दिलैमा आज त्यो मेरो, सुनाऊँ....।
जीवनको त्यो कथा मेरो, मनैमा छाई बसेको,
अगाड़ि के होला ? भन्छु मनले जान्दैन मेरो, सुनाऊँ....।

—नेपालगञ्ज

# आकाश–मण्डल

—प्रेमनिधि शर्मा ज्ञावली

जब मनुष्य आकाशतर्फ हेर्दछ, उसका मनमा धेरै तर्क-वितर्कहरू उट्दछन्; के यो नीलो ऐना भैं चंम्कने ठोस पदार्थ हो ? के यसको फेंद-टुप्पो पनि छ ? के यो आकाश पृथ्वीमा अडिएको छ ?

टल्कने ताराहरू के हुन् ? यिनीहरू साना देखिन्छन् के साना छन् ? के यिनीहरू आकाश-मण्डलमा औंगूठीमा पत्थर भैं टाँसिएका छन् ? अथवा स्वतन्त्र आकाशमा डुल्दछन् ?

ताराहरूको माझमा चन्द्रमा पनि लुकेबाजी खेले भैं यता-उता किन गर्दछ ? आफ्नो रूपलाई घटाउने बढ़ाउने किन गर्दछ ? कहिले हराउँछ त कहिले हँसिया भैं भएर निस्कन्छ ? त्यो सबै के उपर्तोउली हो ? ।

सूर्यलाई देख्दा पनि यस्तै तर्कना उठ्दछन्। किन गर्मीमा ठिक्क हाम्रो शिरमाथि आएर आगो वर्षाउँछ ? जाडामा एकछिन् देखिएर फेरि लुक्दछ ? ।

यिनी प्रश्नहरूको उत्तर राम्रोसंग दिन मुस्किल पर्दछ, तै पनि आकाश-सम्बन्धी विज्ञानको जन्म प्राचीन कालमा नै भएको हुनाले यस

विषयमा अलिकति विचार गरिन्छ। आकाश-सम्बन्धी विज्ञानलाई ज्योतिष शास्त्र भनिन्छ। ज्योतिष शास्त्रले मानचित्र बनाउनमा ठूलो सहायता दियो। आज-भोलि पनि ज्योतिष शास्त्रको ज्ञान-विना आकाशीय ज्ञान असंभव हुनाले यसको महत्व धेरै छ।

पहिलेका खोज र आज-भोलिका यात्रीहरूको दृष्टिबाट चन्द्रमाको विषयमा विचार गर्दा चन्द्रमा पृथ्वीभन्दा निकै सानो छ र साथै पृथ्वीको निरन्तर परिक्रमा गरीरहन्छ। पृथ्वीको परिक्रमा गर्दा चन्द्रमाको एक भाग पृथ्वीको साम्नेमा पर्दछ, यस भागलाई चन्द्रमाको मुख भनिन्छ। चन्द्रमाले पृथ्वीलाई सँदै आफ्नो मुख नै किन देखाऊँछ ? यसमा कारण छ। पृथ्वीको परिक्रमा पूरा गर्ने समयमा चन्द्रमा आफ्नो धुरिमा एक फेर मात्र घुम्दछ—जसलाई हामीहरूले 'चन्द्र मास' भन्दछौं। त्यो चन्द्रमाको एक दिन र एक रात हो। चन्द्रमाको एक दिन यहाँको २६॥ दिनको बराबर हुन्छ। यहाँको एक वर्षमा चन्द्रमाको केवल तेह दिन र तेह रात हुन्छ। चन्द्रमाको सबै मुख जब सूर्यको किरणले प्रकाशित हुन्छ तब हामीहरूले पौर्णमासीको दिन भन्दछौं। यस्तै प्रकारले सूर्यका किरण चन्द्रमामा अलिकति पनि जब पर्दैनन् त्यस समयमा चन्द्रमा लुप्तसमान हुन्छ—जसलाई हामी अमावास्या भन्दछौं।

चन्द्र-ग्रहणको विषयमा विचार गर्दा पुरानो संस्कृत शास्त्र-अनुसार चन्द्रमालाई राहूले ग्रस्त गर्दछ, जसले गर्दा चन्द्रमाका कलाहरू क्षीण

हुन्छन्। मिश्रदेश-निवासीहरूको विश्वास छ कि चन्द्रमालाई भयङ्कर अजिङ्गरले खाने प्रयास गर्दछ अतः त्यसलाई भगाउनको लागि दमाहरू घण्टीहरू बजाउँछन्; जसबाट अजिङ्गरहरू भाग्छन्। चन्द्रमा आकाश-मा पुनः प्रकट हुन्छ।

अनुसन्धानबाट प्राप्त सत्य छ कि चन्द्रमामा पृथ्वीको छाया पर्नाले चन्द्र ग्रहण हुन्छ। सबै चन्द्रमालाई ढाक्छ भने पूर्ण चन्द्र-ग्रहण हुन्छ, सबै ढाकेन भने खण्ड-ग्रहण हुन्छ।

अब सौर्य-जगत्को विषयमा पृथ्वी सूर्यको चारै तिर घुम्ने एउटा आकाशीय काय हो। सूर्य र सूर्यका चारै तर्फ घुम्ने सबै आकाशीय कायहरू सौर्य-जगत्को निर्माण गर्दछन्। पृथ्वीलाई जन्म घर मान्ने हो भने, सौर्य जगत्लाई जन्म-नगर मान्नु पर्दछ—जसमा उपरोक्त घर बसेका छन्। यही नगरमा वृहस्पति, शनिश्चरका ठूला भवन र पृथ्वी, शुक्र, मंगल आदि साना-साना आकार भएका घर पनि छन्। यिनीहरू आफ्नो स्थानमा स्थिर रहँदैनन्, सूर्यका वरि-परि घुमीरहन्छन् र स्वयं सूर्य पनि आफ्ना-आफ्ना सबै उपग्रहको साथमा अति विशाल गतिले अनन्त विश्व अन्तरिक्षमा घुमिरहेको छ।

सौर्य-जगत्का ग्रहहरूमा बुध एउटा ग्रह हो। यो सूर्यको समीपमा छ, यसले शीघ्र गतिले सूर्यको परिक्रमा गर्दछ, जसमा कि केवल ८८ दिनमा नै सूर्यको परिक्रमा पूरा गर्दछ। अति शीघ्रगामी भएकोले यसलाई आकाशीय सन्देश-वाहक पनि भन्दछन्। शुक्र सौर्य जगत्को सुन्दर र

कोमल प्रकाश भएको ग्रह हो। वास्तवमा यसको तुलना न त तारासंग गर्न सकिन्छ न त ग्रहहरूसंग। पृथ्वीको तुलनामा यो निकै सानो छ। यसको परिक्रमाको अवधि २२५ दिनको हुन्छ। बुध, शुक्र झैं मंगल पनि सौर्य-जगत्को एक ग्रह हो। मंगल सूर्यभन्दा २२ करोड़ २० लाख किलो मिटर टाढा छ। अरू ग्रहभन्दा सानो पनि छ। यस्तै प्रकारले वृहस्पति, शनि, यूरेनस, नेप्चून, प्लुटो आदि सबै सौर्य जगत्का ग्रहहरु हुन्।

कहिले-कहिले आकाशमा चम्किलो र चहकिलो चीज खसेजस्तो देखिन्छ — जसलाई हामीहरूले "तारा खसेको" भन्दछौं। ईसाईहरूले "ईश्वरले कसैको आत्मालाई बोलाएको हो" भन्दछन्। यस्तै विभिन्न देशवासीहरूको विभिन्न विश्वास छ, किन्तु ज्योतिषशास्त्र र विज्ञानको भनाई अनुसार यिनीहरू "उल्काहरू" भनिन्छन्। कहिले-कहिले यिनी उल्काहरू आगाको लप्को झैं द्रुत गतिले हिंड्दा-हिंड्दै भस्म हुन्छन्। जस्तै उल्काहरू हुन्छन् उस्तै पुच्छरे ताराहरू पनि हुन्छन्, जसलाई ग्रीक भाषामा "कोमेट" भन्छन्—यसको अर्थ छ 'पुच्छर भएको तारो'।

धूप-केतु पनि यस्तै प्रकारको ग्रह हो, जसका तीन भाग हुन्छन्; केन्द्र, शिर, पुच्छर। यसको पुच्छर निकै लामो हुन्छ। वैज्ञानिकको भनाई अनुसार यसको पुच्छर ८० करोड़ किलोमिटर हुन्छ। उनीहरूको आयु पनि कम हुन्छ। अनुमान गरिन्छ कि धूप-केतुहरु एष्ट्रायडहरूको विस्फोटबाट बनेका हुन्; विस्फोटक भए पछि कोहि, धूप-केतु बन्दछ।

अब ताराहरूको विषयमा पनि विचार गरी हेर्नुहोस् त त्यो सप्तर्षिको समूह। दुई हजार वर्षमन्दा पहिले जस्ता थिए उस्तै छन्, हजार वर्ष पछि पनि उस्तै रहने छन्। के तिनीहरू स्थिर अवस्थामा छन् त? अवश्यै छैनन्। यिनीहरू विश्व अन्तरिक्षमा विशाल गतिले हिंडीरहेका छन् परन्तु हामीमन्दा धेरै टाढ़ा भएकाहुनाले हामीहरूले हिंड़ेको थाहा पाउँदैनौं।

यस्तै अनेक ताराहरू आफ्नो-आफ्नो गतिले भ्रमण गरीरहेका छन्। सैकड़ौं हजारौं वर्ष बित्ने छन् परन्तु तारा, ग्रह, नक्षत्रहरूले मंदिरको आकाश-मण्डल पृथ्वीमाथि पहिलै झैं अटलरूपमा जगमगाउनेछ।

—कोलौदी (गुल्मी)



## लौ चाँडो उठौं

—गोपालप्रसाद पाण्डे—

उज्यालो भयो उठौंन साथी ! घाम झुल्के हिमालमा,
उन्नति गरी हे 'साथी भाई !! बसौंन नेपालमा ।
अन्धकार फारी प्रकाश आयो हे साथी जागौंन !
आमालाई अब सन्तोष लगाई वरदान मागौंन !!
सूर्य र चन्द्र बोकेको झण्डा लिएर अगाडि,
नेपाली हामी संपूर्ण लम्कौं परस्पर हात हाली ।
आमाको माथमा उत्तरमा सदा टल्कन्छ हिमाल,
विश्वमा उच्च राखौंन साथी ! यो हाम्रो नेपाल ।
यहिँ नै जन्म्यौं यहिँ नै हुर्क्यौं प्यारो छ स्वदेश,
पटुका, दौरा, खुकुरी, टोपी यहि हो हाम्रो भेष ।
जुरुक्क उठी कम्मर कसी आमाको सब भार,
बोकेर साथी संसारको सामू रिनदेखि छुटौंन ।
नेपाली भन्ने संसार भरमा प्रख्यात वीर जाति,
उद्योगको लागि लौ चाँडो उठौं परस्पर राग ल्याई ।

—तमघास ( गुल्मी )

# शान्ति ! म तिम्रो खोजमा छु

—पद्मप्रसाद पन्थी—

खोज्दछु मैले बारंबार तिमीलाई
तर, पटक्कै देखिदिन, भेट्दिन,
मानव ऊपर तिम्रो एकछिन पनि राज छैन
कहाँ बस्छयौ ? कहाँ लुक्छयौ ? तिम्रो के मन छ ?
मानवलाई दर्शन दिने बेला कुन हो ? भन,
शान्ति ! म तिम्रो खोजमा छु ।
"हिमालको फेंदमा भेट्छु", मानवले भन्यो;
त्यहाँ तिमीलाई नपाई अल्ल-मल्ल पर्‍यो;
आज पनि चुचुरामा बस्दछयौ भन्ने अनुमान गर्छ,
बल्ल-बल्ल हिमाल चढेर खोज्दै अल्ल-मल्ल पर्छ,
तर तिम्रो दर्शनाभिलाष हटेन
शान्ति ! म तिम्रो खोजमा छु ।
मस्तव आकाश-पाताल चालेर
झन् पछि झन् तिम्रो ठूलो खोज गर्दैछ,
तर, तिमी झन् पछि झन् सन्ध-गन्ध नदिएर भाग्दछयौ।
यो देखेर मेरो मन झन् पछि झन् घंकन्छ,
तिम्रो दर्शनाभिलाष हट्दैन
शान्ति ! म तिम्रो खोजमाछु ।

तमघास ( गुल्मी )

★

# वसन्त डाक

—नरहरि शर्मा पोखेल—

जङ्गलवासी साथी हो !
त्यो एक्लो कोइलीले मात्रै डाकेर
वसन्त आउने छैन,
कोइलीलाई साथ दिएर
सबैको व्यथा चित्तले जानेर
अर्कोको उपर कठोर घातक बन्न
'बानी छोड्' भएर
सबै दिलको मैला माझी खलपत्र फालेर
सबैलाई आनन्द दिनसक्नेगरी वसन्त डाक ।
बाजको जस्तो क्रूर झम्टाई बिर्सेर
सिङ्को जस्तो भयङ्कर आक्रमण भुलेर
आफ्नो दशाको र अर्काको दशाको—
के अन्तर छ ? ख्याल गरेर
सबै दिलको मैला माझी खलपत्र फालेर
सबैलाई आनन्द दिनसक्ने गरी वसन्त डाक ।
खोलो बगेझैं एकहोरो नबगेर
स्याउलीको बोली सुन्दा-सुन्दै नचिढिएर
लामा-लामा खुट्टा चाँडै-चाँडै तानेर
तागत नभए पनि हिम्मत देखाएर
आफ्नो लक्ष ताकेको परानेको
एक-दुईटा खुट्टा बीचबाट नभाँची दिएर
सबै दिलको मैला माझी खलपत्र फालेर
सबैलाई आनन्द दिनसक्ने गरी वसन्त डाक ।

# हाम्रो नेपाल

—मीनराज "आत्रेय"

हेर हाम्रो नेपाल कति राम्रो विशाल,
पहाड़को पोसाक टोपी झल्क्यो हिमाल।
छर् छर् बग्ने छहरा कोइली बास्ने पहरा,
पाइला चाल नेपाली ! भनेर गर्छन् इशारा।

जरी र बूटी अमूल्य यहि भूमिमा विचित्र,
सुन र रत्न धातुको गुप्त छ बास पवित्र।
गौतम् जस्ता ईश्वर यहि भूमिमा जन्मेर,
शान्तिको पाठ सिकाए चीसो पानी पिएर।

गौरी शङ्कर नाचेको यो फूल-बारी पवित्र,
वीरको शान चंकेको यहि भूमिमाथि चमक्क।
पहाड सेतो बारेको सानो छ हाम्रो फूल-बारी,
कोटी हामी नेपाली लिन्छौं यसकै छाहारी।

पूर्वमा मेची खोला छ पश्चिम महाकाली छ,
उत्तरी सीमा तिब्बत दक्षिण यसको भारत।
यही पुण्य-भूमि नेपाल यही वीर-भूमि नेपाल,
यही प्राण हाम्रो नेपाल छातीमा राख्छ हिमाल।

खाँची पाली

*

# बढौं बढौं

—नेत्र प्रसाद "काश्यप"

'हाम्रो रहोस् शान्ति-नीति' यहि पुकार गर्दै,
विश्वभरका मानवसंग शान्ति-बाजी ठोक्दै।
नौला-नौला रमाइला काम अनेक गर्दै,
हाँसि-गरी बढौं-बढौं शान्ति-बाजी ठोक्दै।

हामी सबको एउटै काम एउटै हिंड्छौं बाटो,
हामी सबै हिंड्ने-डुल्ने एउटै छ है माटो।
सबको साथ हाम हल्ली नयाँ पुकार गर्दै,
हाँसि-गरी बढौं-बढौं शान्ति-बाजी ठोक्दै।

दुई दिनको बास छ है रमाइलो घरमा,
ईश्वर संग कबोल गरी आयौं नयाँ काममा।
बिर्सौ सबै कबोल जति साथी! न बसौं है,
हाँसि-गरी बढौं-बढौं शान्ति-बाजी ठोक्दै।

निः स्वार्थी भै सेवक बन्न कर्तव्य छ हाम्रो,
नयाँ-नयाँ आनन्दको बाटो हिंडौं भाइ हो ?।
निरन्तर काम गरी मिलि-जुली बस्दै,
हाँसि-गरी बढौं-बढौं शान्ति-बाजी ठोक्दै।

राजा रङ्क आखिरमा सबै हुने माटो,
हामी सबै भेद छोड़ी खाऊं अब आटो।
एउटो खान्छ भात भने सबैले भात खाँदै,
हाँसि-गरी बढौं-बढौं शान्ति-बाजी ठोक्दै।

खाँची, ढिकुरा

## बाटो

—देवी प्रसाद गौतम

तिमी कहाँ गयौ हेर भुली प्राचीन संस्कृति।
बाहिरी धाकमा लागी व्यर्थमा घुम्दछौ कति ?।

अहिंसा-सत्यका प्रेमी ज्ञानी बुद्ध थिए कुन ?।
नारी काञ्चनको मोह छोड़ी मार्ग लिए कुन ?।

धरामा पहिले राख्ने राम-राज्य थिए कुन ?।
सबले यसलाई नै अरु छोड़ी पुजे किन ?।

राणा प्रतापले शौर्य आफ्नो नीति र साहस।
लिएर मृत्यु पर्यन्त छोड़ेनन् किन सत्पथ ?।

महात्मा गान्धीले के के काम गर्दै गए भन ?।
उनले हामीलाई त्यो सच्चा मार्ग दिए कुन ?।

महा-पुरुषको शिक्षा लिई हामी अगि बढौं।
ईर्ष्या, मोह, सबै त्यागी कर्तव्य पथमा हिडौं।

हामी दृढ़ भई माथि ठूलो लक्ष लिई बढौं।
बन्धुत्व भावना राखी हामी शिखरमा चढौं।

मानकोट ( गुल्मी )



# लम्कौं

—श्री मीनराज "विजय"

संसारको सामुमा हात मिलाई हातमा
संसारको शीखरमा चाँडै-चाँडै लम्कौंन !
शान्तिको झण्डा बोकेको शान्तिको गीत गाएको,
श्यामल पर्वत-मालाले चरैतिर घेरेको,
बीर सपूत खेलेको वीरको लाश पचेको,
सृष्टि-देखि स्वतन्त्र नेपाल छ हामीको।
संसारको.......................

ज्ञानको बत्ती बालेर सबको सामू हाँसेर,
दिदी-बहिनीसाथमा मोही गीत गाएर,
संसारको शिखरमा पुग्न सबको दाँजोमा,
बाटो खनौं मिलेर हात मिलाई हातमा।
संसारको.......................

सबको सामू हाँसेको 'उँचो' हाँक हालेको,
उषाले लाली पोतेको हिमाल टोपी लाएको,
हाम्रो नेपाल देशमा हात मिलाई हातमा,
सूर्यचन्द्र बोकेको झण्डा लिईं साथमा।
संसारको शिखरमा चाँडै-चाँडै लम्कौंन ?,
संसारको साथमा हात मिलाई हातमा।

अर्घा न्यौरीडाँडा



## कवि प्रति

—राधाकृष्ण आचार्य

हे कवि ! लेख्छौ सुन्दर कविता,
तिम्रो भाव बुझ्छन् कविता।
किन हो ! यस्तो मनोहर रङ्ग,
तिम्रा पदमा अनेक तरङ्ग।

कविले कविता प्रति हेर,
कस्तो कस्तो !! ध्यान दिएर।
हामीलाई मूक बनाई,
लेख्छन् कविता कवि रमाई।

कविका सुन्दर भावुक पदले,
सारालाई खिच्छन् हेर।
कविका कविता सुनी सब, भाई,
हुन्छन् इच्छुक कवि हुनलाई।

अझ पनि रसका धारा लुटाई,
फूलको रूपमा युवती लाई।
दिन्छन् उपमा हरे ! रमाई,
कविको बुच्चो पदमा आई।

गुण, लक्षण जो जतिछन् सारा,
अति सुन्दर छ श्रृङ्गार द्वारा।
स्वर्णादिका मालाहरूले,
छाईदिए झैं हाम्रा कविले।

गर्छन् वर्णन तिल-पहाड,
प्रेमिकाको खेल-बहाड।
एउटा आफ्नो कलम बनाई,
लेख्छन् कविता बहुत रमाई।

बल्कोट ( गुल्मी )



शब्द पात हुन् जहाँ तिनी धेरै हुन्छन्
फलरूप ज्ञान कम देखिन्छ। —पोप

# कान्छा-बाजेको औषधालय

मोदनाथ "प्रश्रित"
( साहित्य शास्त्री, आयुर्वेदाचार्य प्र० वर्ष )

म मात्रै होइन, प्रायः हाम्रा गाऊँका सबै मन्छिेहरू कान्छा-बाजेलाई सँधै चुक-चुकाउँछन्। छर-छिमेकमा कैयौं धनी मान्छे पनि मरे, विद्वान् पनि खरे, चटक-मटके राती-राती लाइट लिएर गाउँ चहार्ने फैटा-हरूले सम्म खाल्टो पुरे, तर म देख्दछु तिनीहरूको लाश अगाडि रहदासम्म घरका एक-दुई जनाले डाँको छोड़े, पछि कसैको नाम निशान रहेन परन्तु कान्छा - बाजेको चर्चा हुँदा जसले पनि "हाय ! कान्छा - बाजे !" नभनी छोड्दैन।



उहाँको नक्षत्रकोनाऊँ त 'मित्रलाल' हो तर 'कान्छा - बाजे' नाऊँ।ने हाम्रा छिमेकले जानेको छ, र यसै नाऊँमा नै समाजको माया-प्रीति र विश्वास छ। उहाँलाई समाजले सम्झेको,मेरो बिहे गरि दिएको

भनेर होइन, न त मेरो मुद्दा जिताई दिएकोभनेर, परन्तु उहाँले गरेको निःस्वार्थ समाज सेवालाई संझेर नै 'कान्छा-बाजे' नाम सुन्दा हाम्रो शिर श्रद्धाले नुगीहाल्दछ।

हाम्रा समाजमा म समाज-सेवक भनेर आफ्ना थोत्रा गाला बजाउने कति छन्, अरु त अरु अड्डा-अदालतका घुस्याहाहरू र तीन-चार गुना नाफा निकाल्ने व्यापारीहरू सम्म 'लौन हजूर! यति काम……" भन्दा "ओहो! हामी त यहाँ कै सेवाका लागि त बसेका छौं" भन्दै पालिस दल्दछन्, तर प्रायः मान्छेहरूमा स्वार्थ सिवाय परार्थ को लेस छैन। परन्तु कान्छा-बाजेलाई म कतैबाट बाटो बिराएर आएका देवता ठान्दछु। म, आफ्नो क्षेत्रमा, भारतको गरिबी मेट्न चाहने 'विनोबा' लाई भन्दा 'कान्छा-बाजे' लाई अझ महान् देख्दछु। किन कि 'भावे' मा त बरु नेतृत्व र यशको केहि लालसा हुन सक्ला तर उहाँ त केहि न चाहने शुद्ध-हृदय निरक्षर बुढा।

खद्दरका दौरा सुरुवालमाथि मार्किनको पटुका नैनसुतको टोपी, भोटे गलेबन्दी र काने नेपाली जुत्ता लगाएका झपक्क फुलेका गोरा बुढालाई देख्दा हाम्रा समाजको हरेक वर्गले हृदयले नै मायाँ गर्दथ्यो। चौरासीको पूजा गरिसकेका बुढा तै पनि खिस्स हाँस्दा चन्द्रमा उदाउने दाँत, अमृत पिलाउने बोली। उहाँले जीवनमा बोलेका अक्षर र इशारा माथि आँखा चिम्लेर समाजले विश्वास गर्दथ्यो।

म एक पटक सिकिस्त बिमार परेको थिएँ। दुइ-तीन वैद्य भनाउँदा हरूले कति नै आयुर्वेदी ओखती दिए, लामाले पनि २-४ कुखुरा

काट्यो, कति जनाले चामल गने, खरानी उड़ाए तर १८ दिन सम्म पनि बिमारी बढ़ीराख्यो, मलाई साँझखेर ज्वरो बढ्ने, दिशा लाग्ने तर जाँदा खुलेर न हुने, पेटमा माला रोपे झैं हुने, यस्तै थियो हैरान परेर एक दिन कहराईरहेको थिएँ, एउटी बुढी आएर टिठाउँदै भनिन्— "मेरु बाबु ! के भो बा ! डडुवा कान्छा बाजे कहाँ जाऊ उहाँले छोए पछि टक्कक्कै भईहाल्छ" भनिन् । मेरो घरबाट उहाँको घर एक कोश जति पर्दछ, बल्ल-बल्ल लौहे टेकेर गएँ, बाजे कहाँ म जस्ते ४-५ जना आएका रहेछन् । बाजे आँगनको डीलमा राखेको 'उधिन् ढुङ्गामा' के पिस्दै हुनु हुन्थ्यो ? । पालै पालो गरेर कसैलाई झार-फुक कसैलाई गोली कुनैलाई पानीमा के के मिलाएर खवाउँदै पठाउंदै गर्नु भयो, मलाई अहिले न चिन्हेर सोधपुछ गरी "ए ! हाम्रै बाबु हुनुहुँदो रहेछ" भन्दै खिस्स हाँसेर नाड़ी समाउनु भयो, अनि चुप्पै भएर "एउटा औषधि यहाँ थियो" भन्दै त्यसै पेटीको पालीमा घुसारेको एउटा पोका बाट २-४ ओटा मन्टा र अर्कोबाट एउटा जरो निकालेर त्यसै ढुङ्गामा पिंधी गोली पारेर एउटा खवाउनु भयो २ गोली 'भरे भोलिलाई' भनेर दिदै "बिचरा उति टाढाबाट आउनु भएको" भन्दै अझ आफै टिठाउन थाल्नु भयो, मेरा आँखाबाट आँसु बर्से, म केहि बोल्न सकिन, खाली उहाँको त्यो उदार र महान् आत्मालाई देखेर आफ्नै जीवन संझी घोरिएं । संसारमा साँच्चै नै त्यस दिन मैले महात्माको दर्शन पाएको रहेछु । हुन पनि मलाई त्यही गोली सिवाय, अरु २ गोली पनि खान परेन, हिंड्ने बेलामा मलाई कुतूहल लागेर सोधे— 'बाजे' यस औषधि-को नाम केहो ? कहिले लागे अरु खोज्नु पर्ला" तर बाजेले बीचैमा उछिनेर

"भो ! अरु केहि खाने पर्दैन, यसको नाम तपाईं सञ्च भए पछि बताउँला" भनेर बिदा दिनुभयो । साँच्चै नै घर पुग्दा नपुग्दै म पूर्ण-स्वस्थ भईसकेको थिएँ ।

संसारमा कति डाक्टर, वैद्य र हकीमहरू छन्, जो कि नपच्ने गरी फीस लिएर बल्ल-बल्ल आएर नाड़ी समाए झैं गर्दछन्, भित्र ज्ञानको गुदो न भए पनि "मुख बाउनोस्" भनेर थर्मामीटर लाउने र स्टेथ-स्कोप भिक्ने गरेर झिलि-मिली पार्दछन्, आखिर आफ्नो साथमा भए मनमानी रुपियाँ र न भए बजारबाट ल्याई खवाउनु भन्दै जुल्फी मसार्दै हिड्दछन्, उसलाई सञ्च लागोस् न लागोस् परवाह छैन, पाकेट टेम्याउन पाए पुग्यो । फेरि बोलाउँदा उस रोगीलाई चिन्नसम्म सक्दैनन्, रोगको निदान त परै जाओस् । तर कान्छा-बाजे जसलाई कालो 'क' भैंसी बराबर थियो, घरमा आएका हरेक दर्जाका मानिसमा उस्तै मिजास, जसलाई एक पैसाको लोभ छैन, कहिले कसैसंग रिसिने होइन; रात, साँझ; बिहान उहाँका घर रोगी हर-एक समय आउँछन् भात रुचेन कान्छा-बाजे ! पेट दुख्यो कान्छा-बाजे ! घरमा भीड़को भीड़ छ, आफ्नो पनि काम हुँदो हो, त्यत्रा परिवारका मान्छे, तै पनि जो आयो पालीका पोका खोल्दै खवाउँदै गरी रोगीलाई सञ्चो गराउँनु र मीठो बोल्नु बाजेको व्रतै लस्तो थियो । यसको बदला यति देऊ होइन, यति काम गर्दैन बाबै; होइन, बस्, आएका सित्तैं का अतिथिलाई निको गराएर उनीहरूको स्मरणीय हुनु उहाँको ध्येय थियो । उहाँले कहिले-कहिले भन्नुहुन्थ्यो रे—"अरु नभए पनि यस्तो बुढो थियो भनेर त संझौला" । तर......के भनौं ?' हाम्रा छिमेकी आबाल-वृद्ध सबको

हृदय रुवाएर ८६ वर्षको उमेरमा २०१८ सालमा उहाँ ५ मिनटको बिमारी भई भात खान हिँडेको मान्छे "ए ! मलाई त के भयो ? नातीलाई बोलाओ, टीका लगाई दिन्छु" भन्दा-भन्दै महिरामा थचक्क बसेर शिव-लोकतिर पाल्नु भयो । उहाँको सेतै फुलेको शरीरको आखिरी दर्शन गर्ने मानिसको अपार भीड़ लाग्यो, चिन्हेका र नामै सुनेका सम मान्छेले उहाँलाई आँसुको तर्पण दिए । अब उहाँको नाम मात्र बाँकी रह्यो ।

अहिलेका साउनको कुरा हो म कुनै काम विशेषले डढुवा (जुन टोलामा बाजेको घरछ, गुल्मी जिल्ला भित्रको खिदीमको बीचमा पर्दछ) तिर डुल्दै गएको थिएँ; मलाई एका-एक संझना आयो र उहाँको घर तिर गएँ, दृश्य सबै उस्तै थियो तर उहाँ बाजेलाई देखिन; न त ती बिरामीहरू थिए, बाजेले आफु गएर त्यस घरलाई र गाउँलाई शून्य ट-गराई हाल्नु भयो तर त्यस्तो रमाइलो घरमा खिति-मिती माखोसंम न फर्कने गराउँनु भयो । म त्यहाँ पुग्दासाथ झमझम पानी पऱ्यो; त्यसै पाली—(बाजेको औषधालय) मनि गएर बसें, यसो माथि हेरें, मलाई कस्तो ! कस्तो !! लाग्यो, बाजेले घुसारेका पोकाहरू जहाँको तहीं, तर सबैमा किरा लागेर झिर्याँ-झिर्याँ भई बाजेका वियोगको दुःख-पूर्ण परिचय दिईरहेका थिए; केहि बेरमा बाजेलाई संझेर झैं पालीबाट तप्प-तप्प आँसु झैं पानी चुहुन थाल्यो । म पनि खपी न सक्नु भएर धेरै बेर रोईरहें ।

"परन्तु त्यस औषधिको नाम जान्ने मेरो आशा आशाको आशै रह्यो ।"

जय मानवता !



# कहिले कहिँ छुट्कारा मिल्ला कि ?

—बाबूराम शर्मा गौतम

एक क्षणमा एउटो लहर,
अनिवार्यरूपले निस्कन्छ,
तर
आँखी चि——म्म राम्ररी गर्दासंम
उत्तिको निस्कन्न;
प्रत्येक क्षणमा लहरहरूले
छल्लाङ् छुल्लुङ् पार्दै किनारमा उताछन्,
फेरि उत्ति खेरै अर्काथरि आएर माझमा पुर्‍याउँछन्।
लहरमा मात्रै खेल्न पाए त राम्रै थियो
तर
भयङ्कर जलजन्तुहरूको मुखमा निमेष-निमेषमा पर्दछु;
किन हो कुन्नि ? जल-जन्तु पनि अर्कै रहेछन् कि ?
मेरो साह्रै हाड चपाउन जाति मान्दैनन्,
तर
अर्कै होइनन्—यसो भएर हो, म जस्ता साथी
तजाम छन्।
अतः
तिनीहरू मासु-मासु खान पल्के,
मलाई प्रत्याहट लागेको छ,
साथीहरूको शरीर देख्दा डर लाग्छ, टीठ लाग्छ,
यसदेखि कहिले कहिँ छुट्कारा मिल्ला कि ?

—थोर्गा गौतमग्राम ( गुल्मी )

# ह्रामी पनि संगै जाउँला

—राम प्रसाद शर्मा भुसाल

हे प्यारा साथी ! मनुष्य जाति यी सबै प्राणीमा,
चेतन दियो विधिले पैल्हे सृष्टिको आदिमा।
गरेर हुन उद्योगलाई मानव छोड्दैन,
मानव-आत्मा जसमा छैन त्यो आत्मा हुँदैन।
हुन त आफ्नो संसारै, साथी ! तै पनि स्वदेश–
जातित्व आफ्नो संस्कृति राम्रो देखिन्छ पवित्र।
शिक्षाकोलागि विदेशी ह्रामी खुशी छौं मनमा,
पवित्र गङ्गा रमाइलो सहर मिलेर साथमा।
आमालाई छाड़ी टाढैन आयौं उत्साही मनले,
बिर्सेर हल्ले शिक्षालाई छाड़ी हेर्दैन कसैले।
यो नौलो विश्व नौला छौं ह्रामी चंकिलो हिमाल
संसगै जाउँला लंकेर पथमा बोकेर नेपाल।

वाङ्ला ( गुल्मी )



# आजका मान्छे सित

—कुलचन्द्र खनाल

ए आजका मान्छे !
तँ निकै अगाड़ि गईरहेछस्,
नयाँ छु भन्दैमा
आफ्नो पूर्ण अङ्गको ख्याल नगरी
एक्लो स्वाधीन आत्मा झैँ दौड़ीरहेछस्।
मो लिलो अङ्गमा जरा टेकी
धान न फल्ने पराल झैँ हुस्केर—
...औलाईरहेछस्।
जब अङ्गले तेरो स्थान लुप्त गरिदिने छ,
अनि चीत खाएर पल्टिनेछस्,
तेरो कानमा अन्धो, लँगड़ो, बैरो आदि शब्दका
झन्कार गुञ्जीरहनेछन्।
एक दिन संसारमा तेरो अस्तित्व नै मेटिएर छाया बन्नेछ,
त्यो उच्च शिखरमा पुग्नलाई
तैँले आफ्ना सबै सामानलाई सँगै लानु पर्छ।
शिरदेखि पाउसंमका अङ्ग-प्रत्यङ्गलाई संगै लगेमात्र
तेरो चाल
सुचारु रूपले चल्नेछ
याद गरेर जा।
यसैमा नै तेरो अस्तित्व
धड्धकाईरहेको छ।

—गुल्मी दिमाग मौलिपुर



# दागबत्ती

—दुष्यन्त प्रसाद

दाग बत्ती दिदैछु म त
जीवन-लाश फुक्न
पानी प्यास लाग्दा
रगत फिकी पिएँ,
थकै लाग्दा बाटामा
दिलको सिरान लिएँ,
प्राणाशन गर्दैछु म त
अर्को दुनियाँ हेर्न,
दाग बत्ती दिदैछु म त
जीवन-लाश फुक्न ।
पीपासा रक्तका
आदमखोर बटुवा
तर्क छ ताकतिलो
मानिसको सुरुवा
मुकुटी बनाउदै छु म त
भोलिलाई सौंच्न
दाग-बत्ती दिदैछु म त
जीवन-लाश फुक्न ।

सन्दाप माड़ी काफले (पाल्पा)

# उठ दिदी !

—श्रीमती जयन्ती देवी ज्ञवाली

उठ-उठ स्वदेशी दिदी ! हो, आफ्नो हक लिएर छाड़ौंन,
युगौंदेखि आजसंम बस्यौं हामी करमा,
आफ्नो हक आफै फाली पराईको भरमा,
आजदेखि खोज्नु पर्छ हामी आफ्नो हक,
आफ्नो भरमा हिंडौ सबै ल्याई नयाँ चाल, उठ-उठ…
त्यसर्थी हाम्रा शास्त्र-कर्ता, जाल फिंजाई राखे,
हामीलाई अन्धा बनाई धर्म आफ्नो थामे,
मिलि-जुली शिक्षित बनी नौला काम गर्ने—
हामी सबै हुनु पर्छ, आकाशमा उड्ने, उठ-उठ….
छिमेकका दिदी, बैनी उठिसके पैल्हे,
नयाँ-नयाँ काम गरी उड़िसके अहिले,
हामी पनि कम्ति न हौं छिमेकका भन्दा,
अल्छी बने, गिज्याउलान् बढौं सबै भन्दा, उठ-उठ…
हाम्रो ठूलो शक्ति हुन्छ पुरुषको भन्दा,
अल्छी हुँदा हामी भयौं दलित घिन लाग्दा,
उठौं हामी उठौं अब आफ्नो लक्ष्यसंम,
नारी बसौं सबै आफ्नो सिद्धान्तमा टम्म, उठ-उठ…

थोगा सितलढुङ्गा ( गुल्मी )

✱

# पथ-प्रदर्शन

— लक्ष्मी कान्त शर्मा

अब त न सुत साथी ! भै सक्यो रे ! प्रकाश,
तन, मन धनलाई लौ गरौं है विकास,
अझ पनि पछि नै भो हेर ! हाम्रो स्वदेश,
नवयुवक सबैले पाऊँ शिक्षा सहर्ष।
घर-घर तल्का हे ! दीन दाजू र भाई !
गर-गर अब चाँडै उन्नति हत्पताई,
झलमल कलि राम्रा कोपिला फूलबाट,
सब अब झरिहाल्छन् बिग्रला छाँट-काँट।
भ्रमर-गण छिटो नै रिक्त पारीदिनेछन्,
कमल-दल समाती हात आफ्नो लिनेछन्,
अगि-अगि बढ़ भन्दा झन् उँधो पर्न लाग्यौ,
किन यसरि ड़राई हीनता यो अँगाल्यौ।
झट-पट चढ़ चाँड़ै चंकिदो वायु-यान,
उठ-उठ, बढ़, आफ्नो काम सब झट्ट जान,
अझ अगि बढ़ शिक्षा मार्गमा हात हाली
पछि त न हट भाई ! अन्ध झैं दात टेकी।

छिस्ती क्वन्दी निवासी ( गुल्मी )



## गरीबको दुःख

—दुर्गाप्रसाद खनाल

यहि मातृभूका सन्तति हामी सबै हौं नेपाली,
सानो र ठूलो भेदले कहिले चडिन्न उकाली।
न खान पाउँने गरीबलाई धनीले थर्काउँछन्,
निठुरी मन्टो लगाई हिड्ने गरीबलाई धर्काउँछन्।
झल्लरे भोटो घेराको टोपी त्यो आँधि सहन्छन्,
आधा छ पेट तै पनि दाजू काममा दगुर्छन्।
झोपड़ी सानो चुहुने छानो वर्षाको रातिमा,
दुःखका वज्र आँसुको साथै खस्दछन् छातिमा।
जहान् आफ्ना घरमा रुन्छन्, साहूको कोदाली,
नखने, साझैं त्यो बास छाड़ी मसेङ्को ओराली—
पहाड़ि-बाटो धनीको घोड़ा बनेर चल्नु छ।
घोड़ाले बरु क्यै दाना पाउला गरीब रित्तो छ।
देखेर आफ्ना ती छोरा-छोरी धर्कको गरीब,
कल्पँदो होला धर्तीको चैन, धिक्कारी नसीब।
सामन्ती दाजै! के पूजा गर्छौ? पसिना पिएर,
भित्रको कालो हुँदैन सेतो चन्दन लेपेर।
के धर्मी बन्छौ मानवमाथि मानव चड़ेर,
तिमीले गर्दा संस्कृति हाम्रो गैह्रक्यो भल्पेर।

दिगाम मौलिपुर (गुल्मी)

# असफल

—पीताम्बर

ठूलो जङ्गल
त्यसको माझमा एक पिपलको रुखमनि
हरिया—हरिया घाँसहरूको बार भएको
गुलाबी फूलहरूले
मा—मारी सुशोभित
काँचा र पाकेका
तीतो र गुलियो स्वाद भएका
जल—प्प झलेका फलहरूले युक्त भएको
एउटा विशाल बारी छ।
त्यस फुल-बारीको माझमा
एउटा अननुमीय जाल फिजाइएको छ ;
हुन ता त्यो निर्जीव छ
तर
त्यसले ठूलो सजीवको अपूर्व काम गर्दछ।
त्यसका मित्र धेरै छन्।

आफुमात्रै फुल-बारीमा
टहल्न आति मान्दैन,
त्यसका मित्रहरूमा एउटा-मित्रले
जाल अड़ाउने काँटीको काम गर्छ।
दोस्रो-चावल बनेर बसेको छ;
तेस्रो-त्यस फुल-बारीको शोभामा
लोभिई रहन्छ;
चौथोले—आफ्नो सारा शक्ति लगाएर
जालको सुन्दरता बढ़ाएको छ
तथापि, त्यसैमा अलमलिएको छ;
पाचौं—पक्षीहरूको—
चित्ताकर्षण गरेर
फुल-वारीको शोभाले गमक्क परेर बसेको छ;
छैटौं—तिनै चावल खवाउनकोलागि
सहानुभूति प्रकट गर्दछ,
र, सबै संग धम्की प्रकट गर्दछ।
त्यो जाल फिजाएर
त्यसै रुखमनि
एउटा शिकारी वसेको छ।
त्यसका प्रमुख सहायक दुई छन्—

एउटो ओल्लो छेउँमा एउटो पल्लो छेउँमा ;
तिनीहरू पालै पालोले रहन्छन् ।
तिनी दुईले-लुक्न र हेर्न जानेका छन् ।
जति पक्षी त्यस फुलबारीमा
चारो चर्न आउँछन्,
तिनीहरू आफ्नो घर-बार बिर्सेर
आ-आफ्ना माता-पितालाई भुलेर
त्यहिँ बस्छन् र जालका मित्रहरूले
बस्नकोलागि प्रेरणा दिन्छन्,
जालले लुकेर सबैलाई छोप्दछ;
शिकारी ताली बजाएर
आफ्नो पेट भर्दछ ।
शिकारीले आफ्नो जीविका चलाउनकोलागि
आफ्नो लड्डूकोलागि पनि फिजाएको जाल;
कैयौं योद्धाहरूले काट्ने विचार गरेका थिए रे
तर, काट्न सकेनन् रे ।
त्यस जालको पत्ता लगाउन गएका मानिसहरू
कता गए कता ? ।
हिजो नाई अँस्ति जाल र शिकारीको पत्ता लगाउन गएका
दुई जना मानिस, कता विलीन भए कता ? ।

अतः
जाल र शिकारीको विषयमा
सबै असफल ।



## स्वावलम्बी बनौं

—मा० नागेन्द्र नाथ गौतम

नेपाल हाम्रो जन्म भूमि हो राजा छन् रखवार ।
स्वदेशलाई मिलि-मिली पारी भोगौं सुखको सार ॥

देश-भरि छौं अन्धासरि सब दाजु-भाई ।
बनौं है दूरदर्शी ज्ञान-ज्योति फिजाई ॥

एक कोटी छौं दाजु-भाई पितासरि एक नरेश ।
स्वर्ग जस्तै पारौं सबले प्यारो हाम्रो देश ॥

चन्द्र-लोक जाने सब ती हुन् मानवकै अवतार ।
हौं हामी पनि मानव नै देखाऊँ पुरुषार्थ अपार ॥

द्वेष भाव इर्ष्या त्यागौं खाऔं बरु एकै गास ।
बनौं सबै स्वावलम्बी छोडौं अरुको आश ॥

मिडिल स्कूल खिदीम ( गुल्मी )

# विपरीत

—मुक्तिराम पन्थी

हरिनाथकी दुलही—करीब दुई महिना भइसकेका थिए—बिमार थिइन्। गाउँ-घरमा पाइने जति जरि-बुटी ओखतीले विसेक भएन। वल्ला-पल्ला गाउँका वैद्य र डाक्टरहरूले गरिएको ओखतीले पनि केहि गर्न सकेन।

हरिनाथ दिक्दा—र भए, रोगीको रोग उत्तरोत्तर बढ्दै गयो। देशी डाक्टर बोलाउन मान्छे पटना पठाए र आएको मात्रै शुल्क ४५० कबोल गरी डाक्टर ल्याए। त्यसले नाड़ी हेर्दैमा रोगीको आयु थोरै शेष जानी "मुझसे नहीं होगा, भगवान् कृपा करें तो अच्छा ही है" भन्यो र कबोल अनुसार पैसा लिई चल्यो।

अर्को दिन दिउसो अन्दाज ४ बजे आँपारूखे तिलें—जो अलि-अलि नाड़ी हेर्ने कहलाएको थियो—आयो र टु—क्स बस्दै—"कस्तो छ दाजी! बिसमीलाई" स्वाँ—क्क स्वाँ—क्क शुसा उड़ाउँदै भन्यो। "कस्तो हुने हो भाई! उस्तै छ केहि गरे पनि भएन" दुःखित स्वरमा हरिनाथले भने। तिलेले आफ्नो सुलपा आँगनाका डिलमा टवाक्-टवाक्

पारी [illegible]वमा राख्यो। घाबैं भए झैं गरेर दुवै हातका नाड़ी हेर्‍यो र केहि बेर सम्म गम्भीर विचार गरे झैं गरेर भन्यो—"यिनलाई त वायुले यस्तो गराएको हो; निश्चय सिस्नेचौरको भाँगे कुमाललाई बोलाउनु पर्‍यो; त्यो पक्का धामी छ।" हरिनाथले आफ्ना घर धामी कहिले पनि बोलाएका थिएनन्; अन्यत्र कहिं उसको खेल देखेका थिए, बड़ो रुचाउँदैन थे। यस पाली आफ्नी दुलहीको त्यस्तो अवस्था देखेर धेरै, केहि बोलेनन्। "कुनी तो खोईं? प्रसिद्ध डाक्टरबाट पनि न भएको धामीबाट के होला?" सुस्त-सुस्त भने। तिलेका जोड़ले धामी बोलाउन [illegible] तो साँझ धामी आयो।

राती १० बजे १ माना चावल र १ रु० दाम अगाड़ि राखी दुवै हातमा लेवासका स्यौला हल्लाउँदै धामी काँप्न थाल्यो। सबै ठाउँका देवी—चौरालीको पुकारा गरी बिरामीलाई साह्रै सकस हुनेगरी उसै ठाउँमा बसी पितलको थाल ठटाउँदै वायु बोलाउन थाल्यो—उसै घर या नजिकै मरेको मानिस वायु बनाएर ल्याउने धामीको चलन हुन्छ। हरिनाथको भतिजो अन्दाजी १५ वर्षको 'हिमे' अपिल्ला वर्ष शिलाङ्मा मरेको भागेलाई पनि थाहा थियो 'अब के खोज्छेस् कानी आँखो' भयो। १ वर्ष अगि मरेको हिमे भाँगेमा पस्यो र मरेका मानिसका र जिउँदा मानिसका यसरी कुरा हुन्छन्—

हिमे :—जि—वरे! अभागी र छु खाम-खाम र लाम-लाम भन्ने दिनमा मर्न पर्‍यो हुँ! हुँ!! हूँ!!!

अरु— किन यहाँ आएर हामीलाई दुःख दिन्छस् ? ।

हिमे—मलाई चिगरीले उठाएर लाइदिएकी हो ।

अरु—के खोज्छस् ? ।

हिमे—आधा कालो, आधा पहेलो बनाएका २ धजा र एक कुखुरो ।

उज्यालो भयो बिरामीलाई सारै सकस थियो । "भो ! आओ रामनाम जपौं, गीताका श्लोक पढौं, 'कुखुरो-सुकुरो' चाइएन, आश छैन "हरिनाथले भने । परन्तु भाँगे, तिले र अरु धेरै जनाका वचनले रुवेर धजा उठाई कुखुरो कटाइयो । भाँगेले भात-सात खायो र—"न आत्तिनुस् वायुले छोड्ने वेलामा ज्यादै सकस भएको हो, अल्लिखेरबाट सञ्चो लाग्छ" भन्दै आफ्ना घरपट्टि कुलेलम ठोक्यो । भाँगे गएको आधा घण्टा पछि बिरामीको जीवन-लीला समाप्त भयो । सबैका आँखा शोकाश्रुले भरिए । हरिनाथले ठूलो निःश्वास फेर्दै भने—"हाय ! हाय ! विपरीत ! विपरीत !!"

रेसुङ्गा बाँझाखेत ( गुल्मी )

*

# कलम

—बाबुराम आत्रेय

कलम !
तँ, संसारको आत्मा
तँ नै संसारको निःस्वार्थी सेवक ।
तैंले नै परीवर्तनमय जीवनका हरेक परीक्षामा सफल गराउँछस् ।
तेरो मुख चुच्चे चराको जस्तो कालो,
तै पनि तँ हुँनस् यौटै आँखो मात्र भएको कौवा ।
तैं नै सबको गुण दोष लेख्छस्,
परन्तु तँ हुँनस् भावी ।
तैंले नै कोरिस् वेद, पुराण औ धर्म नीतिका ठेली;
तैंले नै मानवलाई चन्द्रसम्मको अनुभूतिमा लामो उडानको सन्देश दिन्छस् ।
तैंले गर्दा संसारको परिस्थितिले पल्टा खान्छ ।
कहिले तैं नै स्वयं दोषी बनेर
विश्वका मानवलाई लडाउँछस्;
विध्वंसात्मक अणु बमको रचना गर्न

भयकर सन्देश दिन्छस्।
कहिले तरवारभन्दा अँठिलो बनेर
वीर ठहर्छस्।
कहिले ढुङ्गोसम्म पगाल्न खोज्ने
करुणाको रूप लिएर बहन्छस्।
हे सर्वव्यापी कलम !
तेरै अनुपातमा हामी सब
चलम ! चलम !! चलम !!!

गुल्मी अर्थोक शिखरपुर



# गाउँ केले सुधारौं

—हेमराज घिमिरे

आफैले सुधारौं घर यहि हाम्रो नौलो छ औसर।
देश बिग्रयो शोषकले गाउँ कुकर्मीले,
पाइल्छे खेदी रुवाउँछन् इनै अधर्मीले,
देश, काल, परिस्थिति सबै हेरी हामिले,
दुःख सही आँखा खोली देश बढाउँ हाम्रो, आफैले.......

खुशीसाथ पढौं हामी खाई आटो-पिठो,
उन्नतिको चुचुरामा पुग्ने खनौं बाटो,
तास, जुवा, घुच्ची खेली दिन बिताएर
लखिठएर बस्नु छैन काम हराएर, आफैले........

उन्नतिको बाटो हिड्न रहर लाग्ने बेला—
आयो साथी ! हिड़ौं-हिड़ौं युगको नयाँ खेला,
चार पैसा रिन लाग्ला भन्ने न सोचेर,
उत्साहले चाँडै पढौं भविष्य संझेर, आफैले.......

मानवको कर्तव्यलाई कहिले न बिर्सेर,
प्यारो भूमि नेपाललाई सदै अँगालेर,
भाई-भाई आपसमा नातो लगाएर,
हात मुख मिलाउँदा भेद न राखेर, आफैले......

रक्त पिने सामन्तलाई परै लघारेर,
आनन्दको गाई गीत सबै रमाएर,
संसारको हृदयलाई सदै हँसाएर,
चंकियूँला हिमालमा नाम टँगाएर, आफैले.......

खाँची ढिकुरा ढोडेनी



## वीर-नेपाली

—केशवराज शर्मा झावली

देख्दा साना र गोरा,
विजय यिनको चारैतिर,
रजत डोरीले बाँधिएका हाम्रा,
हुन् भद्र हिमालका सहोदर सारा।
जसका डरले इन्द्र डराउँथे,
यिनको खुकुरी देव सराउँथे,
कान्ति देख्दा सूर्य लजाउँने
सौन्दर्य यिनको मदन भुलाउँने।
अन्तःकरणमा पवित्र भावना,
'खुशी रहोस् संसार' यहि छ कामना,
सबैको दिलमा क्षण-क्षणमा,
असर पार्न सक्ने यिनको भावना।
हिमालको मधुर मुस्कान सिकेर,
सब विश्वले यिनैको अनुकरण गऱ्यो,
यिनको प्रेमले विश्व झुक्यो,
समरमा डराउँदा विश्व झुक्यो।

आमाको क्रन्दन सुन्न नसक्ने,
दुःखी देखे आमालाई रक्षा गरिहाल्ने,
आमाको हृदयमा सदै चंकने
थिनलाई संझन्छ सदै संसारले ।

कोलौदी ( गुल्मी )

★

## नौलो जमाना

—मोतिकृष्ण शर्मा ज्ञवाली

संसार हो सागर जीवन हो कमल,
मन बुझौं भ्रमर, हुन्छ नौलो चलन,
रातभर खुंचिन्छ दिनभर फैलिन्छ,
साथी ! यै हो नौलो जमाना ।

राकेट पनि उड़िगो अन्तरिक्ष यात्राको,
सुन्यो हाम्रो कानले मनमा ताजुब भइगो,
तर पनि बेसरी खप्टी भारी कन्नामा,
बोक्न गरीब बोलाइन्छ यस्तै नौलो जमाना ।

घण्ट बज्ने टिप्टिन पानी पर्ने रिमझिम,
त्यस्को भोलि झल्ताल्तो हुने दुःखीको निधार,

फुस्रा-धुस्रा सब धर्ती पानी पर्दा रमाइला,
तर जोत्ने गरीब छ यस्तै नौलो जमाना।

कोहि चढ्ने राकेट कोहि नाङ्गै हिड्दो छ,
सबैले भन्ने 'नौलो युग' खान छैन आधा पेट
जोत्ने मोटर बनेर गरीबको काँधमा,
हला-जुगा झन् ठूला यस्तै नौलो जमाना।

झन्-झन् नयाँ चिच्याहट झन्-झन् ठूलो हल्चल,
क्षणमा गर्ने संहार उग्रन्नमको आविष्कार,
गरीबको क्रन्दन शोषकको आराम,
झन्-झन् उग्र बढ्दै छ यस्तै नौलो जमाना।
शान्तिको नारा एक तिर क्रान्तिको नारा एकतिर,

गरीबको खून चूसी राकेट झन्-झन् बढ्दै छ,
वमको ठूलो आविष्कार गर्ने यै हो विहान,
झन्-झन् ठूलो कोलाहल यस्तै नौलो जमाना।

शान्तिको सुन्दर गानामा प्रकृतिको काखमा,
सबै भाई मिलेर खानु एउटै थालमा,
झन्-झन् रहर लाग्दै छ धोखा झन्-झन् बढ्दै छ,
अहिले झन्-झन हल्-चल् छ यस्तै नौलो युग छ।

ठूलोखर्क (गुल्मी)



# सृष्टिमा एक-दृष्टि

—ज्ञान हरि आचार्य

हामी मनुष्य हौं। हामीमा गौरवता छ। हामीहरूले आफ्नो दाँजोमा प्रत्येक प्राकृतिक पदार्थलाई तुच्छ ठान्दछौं। हामीहरूलाई विश्वास छ कि प्रकृतिले हाम्रो रचनामा आफ्नो सारा शक्ति लगाई-दिएकी छन् र सम्पूर्ण उच्च गुणको समावेश गर्दिन् कुनै कसर बाँकि राखेकी छैनन्।

हामी मनुष्य हौं हामीमा विचार-शक्ति छ। हामीहरूले प्राकृतिक प्रत्येक वस्तुको उपर विहङ्गम दृष्टि पारिसकेका छौं। हामीहरूले प्राकृतिक प्रत्येक वस्तुमा भिन्नता पाएका छौं जड-जडमा भिन्नता छ, चर-चरमा भिन्नता छ। मानव-मानवमा भिन्नता छ।

यो सब आफ्नो धर्म पत्नीको आडमा वेश्यालाई राखी उसैको प्रत्येक कुरामा विश्वास गर्ने मुर्ख मान्छे झैं--सेतो पदार्थको आडमा कालो पदार्थ भित्र छिपेर बस्ने नानी उपर हामीहरूले विश्वास गरेको परिणाम हो परन्तु यसको विपरीत यदि हामीहरूले त्यो कालो पर्दालाई हटाएर निरीक्षण गर्‍यौं भने हामीहरूलाई पत्तो लाग्ने छ कि जड, चर, मानव, सबमा समानता छ।

आजको दुई हजार वर्षभन्दा पनि पहिले देखि एक शब्द चली रहेको छ त्यो हो 'परमाणु' जसको परिभाषा प्राच्य दर्शनानुसार यस प्रकार छ।

जालान्तरगते भानौ यत् सूक्ष्मं दृश्यते रजः।
तस्य षष्ठतमो भागः परमाणुः स उच्यते॥

र आधुनिक विज्ञानको अनुसार यस प्रकार छ पदार्थको सब भन्दा छोटो कण, जसले केवल रासायनिक क्रियामा मात्र भाग लिन्छ।

यी दुवै परिभाषाले आफु-आफुमा जति सुकै भिन्नता राखे पनि पदार्थको सब भन्दा छोटो कण भन्ने विषयमा त एकै मत राखेका छन्।

प्रत्येक परमाणुको अन्तर्गत तीन आवेश मिल्दछन् (i) ऋणावेश (ii) धनावेश (iii) उदासीन। जोहटिङ्ग् ग्रे पोइको घर व्यवहारमा केहि महत्ता न भए झैं परमाणुको अन्तर्गत उदासीनको केही गणना हुँदैन।

सौर-मण्डलमा सूर्य बीचमा रहेर अरू ग्रहहरूले सूर्यको चारैतिर चक्कर लगाए झैं प्रत्येक परमाणुको केन्द्रमा उदासीन र धनावेश रहन्छन् र ऋणावेशले केन्द्रको चारैतिर चक्कर लगाएका हुन्छन्।

सूर्यको आकर्षण शक्तिले अरुग्रहहरू सूर्यमा गएर न गुडुल्किए झैं केन्द्रको धनावेशको आकर्षणले ऋणावेश केन्द्रमा थुप्रिदैनन्।

आज संसारमा जो प्रलय-कारी शक्ति पत्ता लागेको छ परमाणुको केन्द्रको—जहाँ घनावेश रहन्छ, विभाजन हो ।

यूरेनियम नामक पदार्थको परमाणुको केन्द्र-विभाजनबाट यति ज्यादा गरमाहट पैदा हुन्छ कि चालिस, पचास मिलको घेरा भित्र करोड़ौं अंश ताप बढ्दछ अतः प्रत्येक वस्तु भस्मसात् हुन्छन् । यसैलाई परमाणु बम भन्दछन् ।

यसभन्दा पनि १००० गुना भयानक हाइड्रोजन बम छ र यस भन्दा पनि करीब ४० लाख गुना भयानक निकेल बम र कोबाल्ट बम को कुरा समाचार पत्रमा प्रकाशित भएको छ ।

यसबाट हामीलाई प्रत्यक्ष छ कि हामीलाई यो कालो पदार्थले कति धोखा दिएको छ, किन कि जो पदार्थको शक्तिशाली र वास्तविक बल छ; त्यसमा त आफ्नो गर्मीलाई अवशोषित गर्ने स्वभाव प्रयोग गर्दछ र जो अनित्य छ त्यसैलाई मात्र हाम्रा नानी सम्म पुऱ्याइ दिन्छ ।

यसबाट यो प्रत्यक्ष छ कि रचनाको दृष्टिबाट ठुला-सानाको केहि भेद-भाव छैन किन कि जस्तो एक परमाणुको बनावट त्यस्तै अर्को परमाणुको बनावट र जस्तो एक परमाणुको बनावट त्यस्तै यो सौरमण्डल को बनावट ।

प्रत्येक परमाणुको अन्तर्गत तीन किसिमका आवेश रहे सामान

परमाणु पनि तिनै किसिमका हुन्छन् । ( १ ) धनाविष्ट परमाणु ( २ ) ऋणाविष्ट परमाणु र ( ३ ) निष्क्रिय परमाणु ।

धनाविष्ट परमाणुले आफ्नो र अर्काको आवश्यकताको पूर्ति आफ्ना ऋणावेश अर्कालाई दिएर गर्दछ । ऋणाविष्ट परमाणुले आफ्नो र अर्काको आवश्यकताको पूर्ति अर्को संग ऋणावेश लिएर गर्दछ र निष्क्रिय परमाणु यो सब झन्झट बाट तीन कोश टाढै रहन ज्यादै खुशी मान्दछ ।

हाम्रा प्रत्येक आवश्यकीय यौगिकको बनावटमा कम से कम एक धनाविष्ट परमाणु र एक ऋणाविष्ट परमाणुको आपसी सम्बन्ध नै निमित्त कारण छ ।

परस्परमा मेल नखाने परमाणुको बीचमा सम्बन्ध स्थापित गराऊन खोज्यौं भने विस्फोट हुन्छ अथवा उनीहरूको पारस्परिक मेल-मिलापको समयमा बाहिरी नसुहाउँदो कुनै कारण आइपर्‍यो भने पनि विस्फोट हुन्छ ।

यदि कुनै दुई परमाणुको आपसमा राम्रो संग मेल न भएको, भए ती दुबैसंग मिल्ने क्षमता राख्ने तेस्रो परमाणु गई पहिले एउटा संग संबन्ध स्थापित गर्द छ र तुरुन्तै अर्का संग पनि । यस्तो हुँदा तेस्रा परमाणुका माध्यमबाट दुबै परमाणुको सम्बन्ध स्थापित हुन्छ । उनी-हरूको मेल दृढ़ भइसके पछि तेस्रो परमाणु दुवैदेखि अलग हुन्छ ।

एकै साथ विभिन्न परमाणु एकत्रित भए भने सबभन्दा पहिले ती परमाणुहरूमा व्यवहार हुन्छ, जुनको आपसमा ज्यादै नै प्रेम छ, अनि मात्र अरु संग।

यो छोटो लेखमा मनुष्य या कुनै प्राणीका स्वभावलाई लिएर परमाणुका यो स्वभाव संग तुलना गर्नु केवल दुःसाहसको कुरा हो अतः यत्तिमात्र पर्याप्त छ कि कुनै पनि परमाणुको स्वभावमा र कुनै मनुष्यमा प्राणीको प्राकृतिक भावना असमानता पाउनु केवल दुर्लभमात्र न भएर अति दुर्लभ छ।

सत्रौं शताब्दिको अन्त्यमा न्यूटनले आफ्नो गति सम्बन्धी नियमबाट स्पष्ट गरिदिएका छन् कि संसारमा स्थावर र जङ्गमको दृष्टिले चलेको असमानता केवल कपोल कल्पित हो। किन कि यी त बाहिरी बलका परिणाम स्वरूप हुन्।

जे० सी० बोसको महत्व पूर्ण खोजले प्रत्यक्ष गरिदिएको छ कि प्राणित्व सम्बन्धलाई लिएर नर मा जानवर र वनस्पतिको बीचमा असमानता निराधार वृथ हो।

प्राकृतिक सुविधापट्टि दृष्टि घुमाउने हो भने पनि कहीं पनि असमानताको व्यवहार पाउने छैनौं।

हामी विवेकशील प्राणीको सामनेमा यी चित्र प्रत्यक्ष छँदाछँदै पनि

हामीलाई समानताको अनुभव किन न हुने ? प्रत्येक चीज संग समानताको कुरा त अलगै रहोस्, मानव मानवमा असमानताको भावना द्रौपदीको सारी झैं किन हुँदै जान्छ ?

यसको उत्तर स्पष्ट छ, जसरी पदार्थको वास्तविक कथा र हाम्रा नानीको बीचमा रहेको कालो पदार्थछ त्यसरी नै वास्तविक चीज र हाम्रो बीचमा कुनै कालो पर्दा छ। त्यो पर्दा हट्नुको बदला भन्‌भन् कालो हुँदैछ।

हामीले जब त्यो कालो पर्दा हटाउँला तब समानताको सुनौला किरणले मन्द-मन्द हावाको साथमा मन्द-मन्द उष्णता लिएर गाढ अन्धकारमा फसेको प्रत्येक मानवलाई झुमझुम्याउने छन्। अनि हामीलाई छर्लङ्ग हुने छ कि किन यौटै गैलेनाबाट निस्केको चाँदी चाँदीनै हुँदो रहेछ सीसा सीसानै।

अनिमात्र हामीले महसूस गर्नेछौं कि रचयिताको दृष्टिमा परमाणु, सौर-मण्डल, नर, जानवर, जड़, चेतन, स्थावर, जङ्गम सब समान।

—बाङ्गला आदित्य पुर ( गुल्मी )

# नौलो प्रभात

—श्री जय

हिमाल चुली
भन्दछ खुली
चढ्नुछ बाबु
प्रगति-चुली
जीवनको नौलो—
यो प्रभात।
आशा आकांक्षा र
उच्चाभिलाषहरूको
ल्याएको छ यसले
एउटा जमात।
फाड्दै चिर्दै कुइरो-रास
आयो बढ्दै अरुण-पास
हृदय कुसुमको देखिएको छ—
आज सुवासिने चास।
वरिपरि
मस्तिष्क घेरी

चहकिएका छन्
चहकिला बात
आयो जब गाँउदै
तरुण गीत
पर सरि सके पछि—
अँधेरी रात
जीवनको नौलो
यो प्रभात।
आइ-आइ भन्छ फराई
कानमा खुस्-खुस्
अब त तरुण तँ—
जाग्न जाग, जाग्न जाग।
जीवन पाई—
जीवनतिर लाग
आलस छाड़
नौलोलाई
बना सुनौलो
र
सुनौलोमा भरन
सुगन्ध सुहाग।
जीवनको नौलो

यो प्रभात
स्वच्छन्दता स्वतन्त्रतामा
सासको आश ।
अनेक दिन ल्याई कसिंगर—
अन्तरपर्टको खुल्यो द्वार
'ड थियो कालो र नीलो,
आई उड़ायो कसिङ्गर-भार,
भरिएको हृदयाकाशमा अपार
नाम धरी एक तारा मणिसाकार.... ।
जीवनको नौलो
यो प्रभात
भित्र पस्न खोजीरहने
यी सम-विसम सुभट्ट ठाट
जीवनको नौलो
यो प्रभात ।
चरा 'चीं-चीं' गरी उड़े
पाई अनेकौं प्वाँख
कल्पने चरी भुरुरु उड्छे
खाई सुमधुर भवाँक
पुष्प हाँसी खिले

पाई जीवन चाँख

आहा ! कस्तो

मन मस्तिष्कको छाँट-काँट

जीवनको परिपाट

आयो अब साथी !

जीवनको नौलो

यो प्रभात ।



## जीवन

—वसन्त

धरती र आकाश मिले झैं,
नील गगनमा बादल चले झैं,
जलरानीले पृथ्वी घुमे झैं,
जीवन पथमा लम्कदै छ ।

थकित भएर यसो हेर्छ,
जाने बाटा अनन्त देख्छ,
बाटामा गिर्खा आई छेक्छ,
आशा-तरु-पर्ण फट्-फट् झर्छ ।

देवपतन पशुपति ( काठमाण्डू )



## बाहिरी पर्दा किन ?

—केशव घिमिरे

ज्ञानी हामी भनेर आज जन हो ? विद्वान् बन्छौं किन ? ।
लेपी चन्दन त्यो निधार भरिनै विश्वासी बन्छौं किन ? ॥
रोएका यी गरीबको भन तिमी, खूब् रक्त पिन्छौ किन ? ।
लाटा यी दुनियाँ ठगेर दिन हुँ आचारी बन्छौ किन ? ॥

१

आँखा बन्द गरी समाधि कुन हो ? माला जपेको किन ? ।
आत्मा स्वच्छै हुंदैन त्यो यदि भने पाखण्डी बन्छौ किन ? ॥
पैले मोल लिएर छोरी पछि ए !!! संकल्प गर्छौं किन ? ।
तिम्रो धर्म कता छ ज्ञानी भन लौ ! देखिदन मैले किन ? ॥

२

शिक्षाको बदला बनाई कुरुवा त्यो झोपड़ीको किन ? ।
छोरा-छोरी बनाई अन्ध लठुवा बाँधी रहेछौ किन ? ॥
आफु छौ भडुवा नराधम कठै यिनको हुन के गत ! ।
जाऊ याद गरेर नत्र पछि ता पर्ने छ है आपत ॥

३

पाली ( खाँची )

*

# म मेरो घर जाँदा

—बाबुराम शर्मा आचार्य

अल्ल-मल्ल परें भारि हृदयाकाश गर्जियो।
बिजुलीले सरि फेरि झट्ट आलोक पो भयो ॥१॥
विचार मग्न छु फेरि देखदछु शून्य नै जगत।
हृत्तन्त्रीको पनि हुन्छ झन्झनाकार नै फगत् ॥२॥
प्राण वायु पनि ल्यादै हृदयाकाशमा बढी।
वर्षाका धारले ल्यायो भावनाङ्कुर त्यो घडी ॥३॥
मार्ग त्यो कुन हो मेरो ? जसले पार पाउँला।
लक्ष्य नै कुन हो मेरो ? जसको आँत पाउँला ॥४॥
झट्ट अर्को नयाँ मार्ग बुद्धिले आँट गर्दछे।
विकाशको नयाँ बाटो रोजे कै भर पर्दछे ॥५॥
के हो विकाशको बाटो ? नयाँ त्यो कसरी भयो ?।
नयाँ बाटो गए मेरो लक्ष नै पो नयाँ भयो ॥६॥
यसरी दिलमा खेल्दा खेल्दै यो मन-कामना।
विकाशकारीको खोजि गर्न लागे थी भावना ॥७॥
को हो विकाशकारी त्यो जसको साथ ली कन।
नयाँ बाटो सुधारेर कसरी पुग्दछु भन ? ॥८॥

तिम्रो यो साथमा लागी जान इच्छुक छु मत ।
छन् भने तिमीमा यात्री ! स्वच्छता औ पवित्रता ॥९॥
साथमा जानको लागि योग्यता क्षमता अनि ।
शुद्धता क्षमता आदि कोहि केहि मम? पनि ॥१०॥
छन् भने !, योग्य छु यात्री बन्नको लागि मार्गमा ।
वैपरीत्य भए छैनौं दुवै नै आफ्नु कार्यमा ॥११॥

अध्यापक महेन्द्र हाई स्कूल ( गुल्मी )



# वियोग

—हरि प्रसाद शर्मा

मलाई तिमी कहिले संझनु भूलको माझमा ।
फेरि भुलिजानु दुःख लागे मनमा ॥
कस्ले किन आज मलाई वियोग गरायो ।
हृदयबाट निक्लेर आँखा अगाड़ि हरायो ॥
देखेन त्यसको आत्माले यो दुःखी मनलाई ।
असीम गर्दथ्यो मायाँ त्यो भुलिजाने निष्ठुरीलाई ॥
बुझेन जब अब बुझाउन पनि खोज्दिन ।
सबै जानेको पनि यहाँ सान्त्वना पाउँदिन ॥

यतिसंम आएको रहेछ आफैलाई भुली आफैले ।
सबैलाई विश्वास गरी धोखा खाँएछु ऐले ॥
पृथिवीमा नदी बगे झैं बग्यो दुःख मेरो मनमा ।
भगवान् संग यहि प्रार्थना मिलोस् सुख तिम्रो प्राणमा ॥
लक्ष्यहीन गति भई सीमा-हीन यो संसारमा ।
हिड्दै छु घुमने हो कुन दिन शून्यको माझमा ॥
उज्यालो अँध्यारो सदै हुने छ जगत्मा ।
दुःखको पछि सुख आउने छ बिजुली चंमेके झैं रातमा ॥
तर मेरो तेज बिलाउने छ यहि मायामा ।
लाने छैन त्यो दिन पनि कसै माया साथमा ॥
त्यो दिन तिम्रो प्राण कति खुशी होला ? ।
मलाई दिएको मायाँ तिम्रो जब खोसी अर्काले लै जाला ॥

—लङ्का नवगाँव ( आसाम )

*

## राय माग्छ

—पुरुषोत्तम आचार्य

सबैको सारै मन पर्दो एउटा पुण्य तीर्थ छ। त्यस तीर्थमा गएर सबै स्नान, देवी देवको पूजा, दर्शन गरी प्रतिदिन आफ्नो-आफ्नो घर तर्फ फर्कन्छन्। त्यस तीर्थको नाउँ छ "बगैंचा" त्यहाँ, एउटी सारै राम्री बाहुनी बज्यैको गर्भे छोरो सबै संग झगड़ा गरीरहने आदतको छ। त्यसको नाम छ "भाव"। आफुले आफ्नो बाबुलाई देख्न न पाएको हुनाले आमालाई मर्जी भेटाउन विवाह न गरी आफै गर्भ धारण गरेर "अभाव" नाउँको छोरो जन्माएको छ। आमालाई स्वाद भेटाउन्दा कहिले राम्रो हुन्थ्यो र आमाको आँसु लागेर आफुले जन्म दिएको छोरा संग नै मुद्दा गरी रहनु परेको छ। त्यो मुद्दा मिलाउन कति प्रधान न्यायाधीश हरू बदलिए कसैले पनि छिन्न सकेका छैनन्। छोराको कठोर पाद-प्रहारले न फुट्ने नौनी जस्तो आमाको मनलाई सहि न सक्नु भयो र तीर्थ-यात्रा गर्न गएको लेखकलाई सबै वेदना पोखेर "यस्तो मुद्दा कसरी मिल्न सक्छ सबै संग राय माग्न जाऊ न बाबु?" भनेकी हुनाले लेखक सबैसंग राय माग्छ; मुद्दाको सबै मसौदा यस प्रकार छ—

भाव—हे अभाव ! म तेरै बाबु हुँ, तँ मेरो सेवक बन्नु पर्छ, भक्त बन्नु पर्छ, आमाको गर्भ-वेदना सही मैले तेरो जन्म दिएको । अरुको आमा-बाबुमा बाँडिने प्रेम तथा सेवा तैंले खालि ममा मात्र गर्नु पर्छ । प्रेमको स्वार्थले नै तेरी आमाको रूप आफुमा नै मिलाएको । तँ किन आफ्नो छोरो भएर पनि टा-टाढ़ा भागेको ?

अभाव—हुन त तिमी मेरो बाबु रहेछौ तर तिम्रो त्यति नराम्रो स्वार्थले तिमीसंग बस्न मलाई मन लाग्दैन । आमामा बाँड़िने प्रेम औ भक्ति एक्लै पाऊँ भनेर आमाको आश्रय नगरेकोमा म ज्यादै घृणा गर्छु । आजसम्म टाढ़ा रहेको छु, पछि पनि स्वार्थले कालो भएको तिम्रो मुख देख्न नपरोस् भनी ईश्वरसंग प्रार्थना गर्दछु ।

भाव—तँ के फेरि त्यति सानो कुरा सम्फेर आफ्नो जन्म-दाता बाबुलाई घृणा गर्छस् ? 'क तँ बाबुको मूल्य सम्फन संक्दैनस् ?' अरुका छोराहरू त पहिलो बोलीमा बा–बा–भन्छन्, काखमा बस्छन् तर तँ मसंग बस्दै बस्ने छैन भनेर प्रतिज्ञा गर्छस् ? आ, संगै बसौं साना-तिना कुरा भुलेर जीवनको रस लुटौं ।

अभाव—थोपा-थोपा मिलेर समुद्र बन्यो, भने के थोपाको मूल्य नै छैन ? तिमी सदैका सुत्केरा छौ, जसमा कि मेरो एउटै रूपलाई नाना रूप दिन्छौ । यद्यपि म पनि जन्मन्छु, जन्मने वाला पनि

गन्दा हुनु पर्ने, तर ममा एक क्षणमा नै पवित्र बन्ने शक्ति छ, म गन्हा छैन। अवला बलवान् बन्ने कोशिष गर्छन्, तिमी बलवान्, अवला बन। तिमीमा रहेको विरोधी धर्मले नै मलाई टाढै राख्छ। विपरीत धर्मवाला तिमीसंग म घृणा गर्छु।

भाव—तँलाई घृणा लाग्छ भने म पनि तेरै रूप धारण गरुँ ?, तँलाई नै एउटा बनाऊँ त ?।

अभाव—म तिम्रो मालिक हुँ, तिमी मेरा दास हौ, तिमी न भई मेरो मानने छैन। मेरो स्याहार-संभार, प्यार, तिमीबाट नै हुन्छ। जस्तै—तिम्री आमा प्रकृति सुमधुर सुललित मुस्कानले सबैको चित्त-वृत्ति पुष्पित बनोस् भनेर मुस्कुराई रहेकी छन्। बाबुले मेरो रूप धारण गरेका छन्। त्यस्ती आमाको काखमा बसेर आमाको त्यस हाँसोलाई सम्झन नसकी, नभएका बाबुको सम्झनालाई बाबु भए त समर्थ भएको छोराले भक्ति पूर्वक सेवा गर्ने थिए भनी मेरै महत्व बढाउँछौ।

अभावरूप पिताजीको सेवा गर्न खिपाछु तिमी भावरूप माताको सेवामा किन मखण्डी ?, यदि तिमी आस्तिक, ज्ञानी, पण्डित, सज्जन, बन चाहन्छौ भने नाना दुःखले दुःखित भएकी आमालाई नाना सेवा द्वारा खुशी बनाऊ। मानिसको साथी मानिस नै हुन्छ भन्ने सुनेकै हौला ! तिमी भाव हौ भावसंग नै प्रेमगर तिम्रो स्वार्थ सिद्ध हुन्छ। तिमीसंग साथै बस्ने प्रेम

गर्नें तिम्रा अरू छोरा छन्। ती छोराहरूको पालन-पोषण आमाबाट नै हुन्छ। तिम्रा अभावरूप पिताबाट अवश्य हुँदैन।

आव—के कलि त न आएको? छोराले बाबुलाई दास भन्ने? आस्तिक बन्दछौ भने पिताको सेवा नगर भन्ने?, रावणले पनि मूल परेका छोरालाई नदीमा बगाए थे। म पनि यसलाई अग्निको ज्वालामा जलाइ दिन्छु।

अभाव—ऐँ, ?? साँचै त कलि आए छ। तिम्रो वाक्यबाट नै कलि आएको कुरा छर्लङ्ग हुन्छ। आस्तिकको टोपी लगाउनु, नास्तिक रावणको दृष्टान्त दिँदै छोरालाई अग्निको ज्वालामा जलाइ दिनु, आमाको सेवा गर भन्ने राम्रो कुरालाई छिपाएर अभावरूप पिताको सेवा गर्छु भन्नु, मलाई गजब लाग्छ। म फेरि पनि भन्छु तिमी मेरा दास नै हौ। तिमीलाई दास बनाउँदा मर्नं परे मरुँला। छिः छिः म तिमीसंग घृणा गर्छु, म तिमीलाई बाबु भन्दै भन्दिन।

आव—फूल-बेञ्चआ मेरा मितभाई छन्, मलाई हेला गरेकोमा परार्ध रूपियाँको जालसाजी मुद्दा एकै पटक लगेर ठोकिदिन्छु। मलाई खान नभए पछि तँलाई पनि खान दिन्न। अब मुद्दा पेश गरिहालें। माईले भनेका छन्—"चाँडै नै यसलाई जेलमा ठोकिदिन्छु"। बाबुको ठाउँमा राखेको भए, छोराको ठाउँमा राख्ने थिएँ। ✱ अर्घा अँघेरी (गुल्मी)

# मैले नर्क देखें

—लक्ष्मीनाथ शर्मा

हिजो मैले एउटा सपना देखें,
सौभाग्य भनौं या दुर्भाग्य भनौं
सपनामा मैले नर्क देखें।
कोहि 'फुटपाथ' मा छट्पटाई रहेको देखें—
कोहि कारमा सिनेमा गएको देखें।
कसैले मूर्ति पुजेको देखें,
कसैले सुँगुर लुछेको देखें
सौभाग्य भनौं या दुर्भाग्य भनौं
सपनामा मैले नर्क देखें।

× × ×

छेउँमै बसेर मैले कविता लेखें
एकजनाले 'रम' पिएको देखें
अर्कोले पानी पिउन पनि नपाएको देखें
नर्तकी नाचेको देखें, कोही झुमेको देखें
काहीं 'ब्यान्ड' बजेको देखें
सौभाग्य भनौं या दुर्भाग्य भनौं—मैले नर्क देखें।

पश्मीनाको खोलो—
कल्पनामा पीप देखें
परिश्रम गर्ने पापी देखें
मोजगर्ने धर्मी देखें
वातावरण असाध्यै धमीलो देखें
दुर्भाग्य नै भन्नुपर्‍यो—
मैले नर्क देखें।

—पिक्कल ( इलाम )



# तिमी कहाँछयौ !

—तारेन्द्र मारडव्य

( १ )

आउलौ भनता अधिक दिन विते बाँकी छ एक दिन,
फूल-बारी-बिचमा म उत्सुक भई आइ रहेछु लिन;
साह्रै दिक्कछु है ! तिमी नमिलदा नैराश्यको भावमा,
यै बेला तिमी आई पूर्ति गरियौ मेरो कुनै कामना।

( २ )

कैयन् भाव लिएर आज म यहाँ पर्खीरहेको दिन,
देखिन्न्यौ पथमा प्रिये ! किन तिमी कस्तो छ पापी मन;
पश्चात् लागि रहेछ खूब पथमा तस्दा निहाली कन,
यो बेला महिनासरी हुन गए छोटा कठै ! यी दिन।

( ३ )

मेरा भावहरू हटे अब सबै दौडी सकिन् कल्पना,
आ थेँ म यहाँ अनेक तहका मीठा लिई भावना;
भन्नू खुस्स प्रिये ! यहाँ छु म भनी बिन्ती छ मेरो अति,
साह्रै दुःखित छु तिमी नमिलदा भागी रहन्छ्यौ कति।

( ४ )

हेर्दा टक्टक नै दिमाक बिचमा के ! के ! भरी आउँछ,
फेरी तत्क्षणमै विलुप्त हुनगै मिछ्थाट झैं लाग्दछ;
लौ-लौ आउ प्रिये ! छिट्टै अब तिमी धेरै म थाकी सकें,
आउन्न्यौं त प्रिये ! म आफु बिचमा आफै बिलाई सकें।

—गुल्मी भट्कुवा तिलाघर ( गुल्मी )

☆

# ❀ अर्कालाई देश दिदैनौं ❀

—अच्यूतराज ज्ञवाली

किन हडपिन्छौ ? किन तडपिन्छौ ? अशान्तिको यो सागरमा
अशिक्षाको यो कालो मैलो गैसक्यो प्रभातमा
प्रभाती उषा खिलेर आईन् भाग्य को हाम्रो सीमा मा
कस्ता हाम्रा पूर्वज गए कस्ता हामी हुने छौं ।
आजको युगमा युवक हामी केवल मोहमा तडपिन्छौं

किन हड……

फ्राँन्स, अमेरिका, रूसले आज के गर्‍यो के गर्दै छ ?
ठोसि ठोसिकन खाना खाई लाउनमानै भुल्दै छ
खाना, कपडो, विद्या, उन्नत भाग्य कस्ले खोल्यो रे
देशको उन्नति गर्नु भन्दा गद्दी पलङ्मा सुत्नेरे

किन हड……

उस्न बढाओ ज्ञान बढाओ देशको निम्ति अघि बढ
विश्वसमाज टोली जान साथै इतिहास पढ
नेपाल आँमाका बीर छोरा हौं नेपाली हो जात
उच्च शिखर मा स्वदेश राखन युवक नेपाली जाग

किन हड……

एक्लै दाजु शाहस गर्दै गर्छन आफै यता उता।
कोट, पैण्ट लाई टाई, मोजा लीई फेरी लगाउ जूता
जाग जागहे युवक नेपाली! देशको रक्षा गर्नलाई
अर्कालाई देश दिदैनौं तत्पर छौं बरु मर्नलाई

किन हुड......

भटफुवा ( गुल्मी )



## गान्धीसँग

—युवराज गौतम

( १ )

जसरी उदित हुन्छन् अन्धकार नाश गर्न,
रुचिर किरण-शोभी भानु उद्दीप्त-वर्ण।
त्यसरी तिमि उदायौ प्रान्त गुज्रातदेखि,
भवन-दलन गर्ने वर्गको हर्न शेखी॥

( ०२ )

सतत दलित देख्यौ देश अङ्ग्रेजदेखि
दलित-जन उ भन्थे पाल्नु भो स्वर्गदेखि।
हुन त तिमि थियौ है मानिसैका स्वरूप
तदपि सब लियौ त्यो कार्य देव-स्वरूप॥

( ३ )

कति त जन ती भन्थे 'बुद्ध-देवा' इनै हुन्,
कति बुधवर भन्थे 'राम' वा 'कृष्ण' पो हुन्।
अरु नर कति गर्थे तर्क 'जेसस् ईसा' मा,
तदपि ब सब जे होस्, थ्यौ तिमी एक धरामा॥

( ४ )

गई नजर गरी त्यो दक्षिणी अफ्रिकामा,
जटिल दमन-पूर्ण क्रूरकर्मा दुरात्मा।
दमन अति ब गर्थे 'इण्डियन्' तुच्छ भन्दै,
तर शमन गरायौ ऐक्यको भाव छर्दै॥

( ५ )

सकल कठिन भोग्यौ देश यो मुक्त गर्न,
निखिल बय लगायौ भै तिमी स्वार्थ-शून्य।
अधिक समयदेखिन् नष्ट-सत्ता भएको,
चिर-सबल गरायौ अन्त्यमा देश आफ्नो॥

( ६ )

सतत कमर बाँध्यौ कार्य ती पूर्ण गर्न,
अहह! कति ब भोग्यौ कष्ट देश मुक्त गर्न।
"पर-जन-परिभूता भारतीया सुभूमि",
अघि सरिकन पाऱ्यो मुक्त यी जन्मभूमि॥

यदि कहिं परि आए देशमा कष्ट पर्ने,
समर-बिच विषे क्यै युद्ध-कार्यादि गर्न ।
सकल नर बहादुर वीरका नाम-धारी,
उ सब यहि अंगाल्छन् खड्ग, बन्दूक, कटारी ॥

( ८ )

सकल यहि अगाल्थे बाहिरी वा स्वदेशी,
अखिल पतन हुन्थे अन्त्यमा सर्वनाशी ।
यहि कदम ती 'हिट्लर' आदिले श्रेष्ठ मान्थे,
अनि विकल भई हा ! नष्ट-राज्यै भएथे ॥

( ९ )

तर तिमी त अगाल्यौ भिन्न बती शस्त्रदेखि,
सकल-भुवन-वन्द्या शान्ति-पूजी सुनीति ।
प्रकट गरी उ हिंसाबाट साहित्य शस्त्र,
चकित पनि गरायौ विश्वको विज्ञ-वर्ग ॥

( १० )

सब समय लगायौ सत्यको खोज्न तत्व,
सहि र उचित संभयौ सत्यको गूढ-तत्व ।
दृढ भईकन लिन्थ्यौ सत्यको मार्ग नित्य,
नटवर बनी खेल्यौ सत्यको भव्य नृत्य ॥

यसरी सहि वतायौ विश्वमा शान्ति-मार्ग,
उपरि पनि उठायौ देशको निम्न-वर्ग।
'हरिजन' दिई संज्ञा ऐक्य भावै जमायौ,
सकल जन पुकार्छन 'बापु' कहाँ विलायौ॥

—थोर्गा (गुल्मी)



## गन्टनो

—मुरलीधर पन्थी

मेरो यो जीवन-चङ्गा
उडीरहे छ आज कहाँ ! ?
घेरो यो, वादल नङ्गा
लगी रहे छ आज कहाँ।
नथ्यो त्यसमा कुनै तन्तु
नथ्यो त्यसमा कुनै जन्तु
नथ्यो त्यसमा कुनै पट
नथ्यो त्यसमा कुनै तट।
हाय !! हरे ! म कसो गरूँ
जेसे छैन कुनै सहारा
हाय हरे ! म कसो गरूँ
मेरो नै छ सोही सहारा।
कति जञ्जालबाट आज
निस्कुरहेको मात्र थिएँ
कति जञ्जालबाट आज
खिस्कि सकेको मात्र थिएँ।
यत्तिकैमा आज मभी
भीषणताको कस्तो प्रहार
यत्तिकैमा आज ममा
भीषणताको कस्तो प्रसार
देव ! हरे !! तिमो रहेछौ
निष्ठूरताका दण्डधारी,
दैव ! हरे !! धिमी रहेछौ
क्रूरताका खण्डधारी।
दैव ! तिमी स्वयं कथ्यौ
मेरो यो जीवन-चङ्गा
देव, तिमी स्वयं मथ्यौ
घेरो यो, जीवन-चङ्गा।



—घुर्कोट (गुल्मी)

# नयाँ संसार बन्ने छ

—चन्द्रकान्त पन्थी

एउटी आइमाई चिथरे डोकोमा पितलको गाग्री राखेर पानी ल्याउन जाँदै थिईन्। बिहानीपख भै सक्यो भनी कुखुराहरूले कुखुरी-काँ!!! को स्वरले संसारलाई जगाई सकेका थिए। कता-कताबाट गुन्द्रुक गर्ने शब्द उनको कानमा पऱ्यो। त्यसै समयमा उनी ठाडा-ठाडा कान गराएर सीरासर गइन्, शब्द नजिकै आइ पुग्यो। राम्ररी उज्यालो पनि भइसकेको थिएन। मानिसलाई चिन्ह पनि गाह्रै हुन्थ्यो। त्यत्तिकैमा साम्नेबाट एक एक ओटा पाखी ओढ़ेका पन्ध्र-सोहजना मानिस कुरा गर्दै आईरहेका थिए। तिनीहरूका मुखबाट करुणामय शब्द मात्र निस्कन्थे। कुनै भन्दथे—"सबैको जिन्दगी यस्तै हो।" अर्कोथरी थप्थे—"बहुत असल थियो, के गर्ने? दैवले यस्तै गरिदिए मानिसले भनेर हुने रैन छ"। उनको मनले थात छोडयो "कसलाई के भयो? को के भयो?" भनी तिनी मानिस संग केहि कुरा नगरी हताश र पताश गर्दै पँधेरा तर्फ गइन् तर तिनको शरीरमा जति सुकै चीसो बतासले पंखा चलाई रहे पनि जाड़ो लागेको थिएन। अन्तर्द्वन्द्वको साथ पँधेरा गई गाग्री भोरी घरतर्फ फर्किन्। उनको मनमा अनेक कुरा उदाउँदै बिलाउदै गरीरहन्थे। उनले घर गएर

के भनुन् ? कसरी भनुन् ? को संग भनुन् ? । घरमा त्यसरी फर्माएर बोल्ने ताकत पनि थिएन । किनकि उनका बाबु-आमाले दिएको उपदेश—"छोरी ! पतिदेवको सेवा गर्नु, सासु-ससुरासित वर्ता नबोल्नु, आफ्ना मान्य जनले अह्राएको मान्नु, एता उति चाहिएको काममा अथवा सासु-ससुराले पठाएर मात्र जानु"। यिनी कुरा प्रतिदिन घोकी रहन्थीन् ।

यिनैको आधारमा रही जीवन-लता हुर्काउन परेको थियो । निकै तर्क वितर्क गर्दा गर्दै उनी घरमा आइपुगिन् । डोरो राम्ररी परेको थियो । सासु उठेर कतिका धन्दा गरिसकेकी, तिन्लाई देख्ने बित्तिकै सासु फत्फताउन लागीन् ।

उनले नित्य गर्नु पर्ने काम सबै पूरा गरि सकीन्, उनको मनमा न उमङ्ग, न उत्साह न कुनै कुराको स्वाद थियो । पतिदेवसंग कुरा गरुन् भने सोझरी हेर्न त लाज लाग्ने अझै सामुन्नेमा गएर कसरी सोधन् सकुन् ।

काम-काज सिध्याइसके पछि उनलाई सासुबाट आज्ञा मिल्यो "आज तल्ला पाटा तोरी छिन्नु, अलि बेरमा म पनि आइ पुग्छु" सुन्ने बित्तिकै हिड़िहालीन् । बाटामा एउटा पोखरी पर्दथ्यो जब त्यहाँ पुगीन् तिनका आँखालाई अर्कै कुराले आकर्षण गर्‍यो ।

पोखरी-नजिकै मस्तै स्वास्नी मान्छेहरू बसेका, तिनीहरू भन्दा ४–५ गज यताछदै यता करुणामय दृश्य देखीन् । १०–१२ ओटी

स्वास्नी मान्छेहरूका माझमा एउटा लगभग आठ वर्षे केटी बसेकी। पतिको वियोगले भनौं भने त्यति सानी बालिकाको पतिसंग के प्रेम थियो! मानौं माइतीको वियोगले होला, घोप्टे मुख लगाएर बालिकाले सुँक्क, सुँक्क गर्दै ओढेको पछ्यौराले आँसु पुछ्दीराखेकी थिइन्। उनले त्यो हेर्न सकीनन्, बर्र बर्र आँसु खसाली आफ्नो काममा गइन्, काम हातमा आएन, शरीरमा घाम पनि लागेनन्। उनलाई यो घटना कहाँ भयो? कसरी भयो? थाह थिएन र यस कुराले कुत्कुती लगाउन थाल्यो। कसैसंग सोधुन् आफुले चिने-जानेको कोहि छैन; केहि उपाय लागेन, यत्तिकैमा सासु आइपुगीन्। दुवैले काम गर्न थाले, लगभग एक घण्टा पछि सासुले त्यो केटीको कुरा आफै उठाईन् —"इनी हाम्रै गाउँका मान्छे हुन्—४५ वर्षको उमेरमा जो आज राति स्वर्ग भए। पोहर साल बिहे भएको हो। अझै राम्ररो वर्षदिन पुगिसकेको छैन। पहिली दुलही ३ भाई छोरा र २ टी छोरी पाएर स्वर्ग भएकी हो। त्यस पछि हामीहरू मिलेर बिहे नगर भन्दा भन्दै यति सानी बालकलाई भित्र्याए तर आज दैव लागि हाल्यो। दुलही अँस्ति ल्याएका हुन्, के गर्ने? बिजोक देख्नु पर्‍यो। मैले पंधेरा तर्फ हेर्न सकीन। त्यस केटीलाई देख्ने बित्तिकै सोचे, के यस केटीलाई पति भनेका यस्ता हुन्? सासु-ससुरा भनेका यस्ता हुन्? के थाह होला त? अवश्य छैन तर आज त्यसको विवाह नगरेको एक वर्ष न पुग्दै पतिले लगाइदिएका चुराहरू आफ्ना हातबाट फुटाल्न पर्‍यो। ४५ वर्षका पति देवले लगाइ दिएको सिन्दूर मेटेर सेतो कपड़ा बाँधी आफ्ना माइतका दिदी-

बहिनीसित खेल्ने बेलामा अर्कैको घर कुरेर बस्नु पर्‍यो। घरमा नबसुन् भने बाबु-बाजेले गरि आएको धर्म थाम्नै पर्‍यो। यौवन अवस्था आउँदा आफ्ना दिदी-बहिनीहरूले चुरा किनेर लगाएको देखदा त्यसको मन चिरिएर जाने छ के गर्नें ? दैवले यस्तै पार्‍यो !"

उनले बल्ल छोटकरीमा उत्तर दिने अवसर पाईन्। "के आजको विशौं शताब्दीको संसारमा पनि पहिले जस्तो रूढावादी प्रथा चलि राख्ला त ? आज का नवयुवकले के यो संसारलाई यस्तै रहन देलान् त ? कदापि यस्तो स्थिति रहन सक्ने छैन। रुढीवादी प्रथा हटाई 'बाल-विवाह रोकी' 'बाल-विधवा-विवाह' गर्नें प्रथा चलाउने छन्। तब संसार बन्ने छ।

गौरा खर्क धुर्कोट ( गुल्मी )



# गर्नु छ भन्दैमा

—हरि प्रसाद काश्यप

हुनैको लागी नै आँखा पाएका छौं,
हेर, तर त्यसले जाने बाटो राम्ररी ठम्याऊ,
तिम्रा जीवनका थुप्रानिहालेर हेर,
धर्म चक्षुलाई ज्ञानचक्षु बनाऊ,
नहेर मनपरि हेर्नु छ भन्दैमा।

तिम्रो बोलीमा खुदो घोलियोस्,
सुन्ने ज्ञानले पिपासा मेटियोस्,
लालित्य होस् तर प्रष्ट शब्दमा,
रत्नले झैं थोरैले धेरै काम गरोस्,
तर धेरै नफत्फराऊ बोल्तु छ भन्दैमा।
हिड हिड संसारै हिडीरहेछ—
तर राम्ररी लक्ष ठहराई;
न परीस् पछुतो टुङ्गोमा पुगी,
सँगमा बन्धु बर्गं पनि लै जाऊ,
तर नफुङ्गाल भीरमा जानु छ भन्दैमा
गर्नै पर्दछ संसारमा काम—
हेरी हेरी समाजको ढङ्ग,
जसमा तिमीलाई पागल बन्न नपरोस्—
तर नगर मनपरि गर्नु छ भन्दैमा।

★

# स्वदेश-कल्पना

—श्री शिवकुमार "सरोज"

हे मातः! जननी प्रकाश मयकी त्यो काख तिम्रो छुटी,
आएँथे म यता जुन क्षणमहाँ छोड़ेर तिम्रो स्थिति।
मेरो यो सब शीलता हुनगयो नष्ट व्यथाले गरी,
कोही छैन मलाई शान्ति र तथा साथ प्रदा यो घरि॥ १॥

तिम्रो त्यो सुविचिन्तनीय ममता वेतोड़को भैकन,
अत्याकृष्टित गर्दिछे क्षण सदा मन्मा दिई संझना।
आँखामा जलका अगण्य कणले हुँदो धमीलो अति,
संझन्छु स्थितिको मुहानकन लौ दुःखी हुनाले अति॥ २॥

सन्ध्याको धमिलो पना जब भई आदित्य-जाज्वल्यमा,
जस्तै ती मनका अघोर लहरा आई सबै संझना।
चाहन्छन् अनि देख्न ती त्यस छटाको प्यासु मन भैकन,
त्यस्तै त्यो छन्निलो मुहान दहमा हुन्छु पिपासी मन॥ ३॥

हे आमा? परदेशमा जति मैंए तौ स्वर्णयुक्ता छटा,
संझी त्यो घरको मुहान मनमा छापर दीव्यालता।
प्यासोमा अति रद्द भैकन म लौ देख्दी न देखी सुख,
चाहन्न त्यसको अणु भरि कहिँ त्यो दीव्य छोड़ी मुख॥ ४॥

× × ×

आउँथ्यो सुवसन्तको जब छटा छाएर चारैतिर,
सौन्दर्या मनमाधुरी जगतमा घुम्थी सुस्वर्गैतिर।
छाई त्यो पृथिवी भरी कुसुम ती फुल्थे मनोहारी भैं,
देखिन्थीन पृथिवी झलक्कसितकी भएर स्वर्लोक झैं ॥ ५ ॥

फुल्थे ती वनमा गुराँस र मियाल रातै र सेतै भई,
झल्कन्थे लहरा र पात सब ती हारीत्य रङ्गी भई।
कोइली मधुरो सुशब्द खुवली 'कुहू' गरी बोल्दथी,
छाउँथ्यो वननादले जति सबै माधुर्यता राग ली ॥ ६ ॥

खेल्थे ती धरणीमहाँ मधुरता छाएर मनमानमा,
गाउँथे सुवसन्त गान म कदा बिर्सेर सारा जना।
त्यो आनन्द छटा मुना भरी लिई लालित्यको तानमा,
लेख्थे ती कविता सदा मन दिई बासन्त्यको मानमा ॥ ७ ॥

आउँथे मनमा अनन्य गहिरा ती भावनाका लता,
मानुष्यादि र पुष्पका सरसिला साहित्यकारी छटा।
त्यो साहित्य कला र ग्रन्थ थरिका गीतिमहाँ भावना,
ती सारा सब नाशमा पुगिगए अन्यत्र बस्दामहाँ ॥ ८ ॥

तिर्खा लागिदियो भने म कहिले जान्थें र खोलामहाँ,
पिउँथे खुब जल् चीसो खुसि भई हुन्थ्यो मनोहर जहाँ।
भोको हुन्न कदापि काख जननी बस्दैनथें भोकमा
दिन्थ्यौ हे जननी! मलाई फल ती पक्वान्नका साथमा ॥ ९ ॥

हे आमा ! अब लौ कहीं पनि यहाँ मिल्दैन जो चैनको
चाहन्छु चरणमा कहीं पनि गए पाइन्न त्यो मानको।
मीठो स्वाद तिमीमहाँ जति सबै, देखेर आमा मत,
आइ दिव्य सपारी जा स्थिति छ लौ बस्छु स्वभूमा अब ॥१०॥

—थोर्गा सेमरे पोखरा ( गुल्मी )

☆

# आमा प्रति

—चिरञ्जीवी शर्मा

हे आमा ! तिमी छौ शान्त सदा धैर्य लिई खुब।
तिम्रै छ मोहिनी शोभा खोज्दछन्यौ विश्व लम्कन ॥
तिम्रो हृदयमा बीर नेपालीहरू खेल्दछौं।
आमाको प्रकृति-शोभा धन्य हौं हामी देख्दछौं ॥
विश्व-शान्ति रहोस् भन्ने आमाको शुद्ध भावना।
गएर खुशीले हामी गर्दछौं स्वर्ग-कल्पना ॥
यी राम्रा छहरा भीर झन् राम्रा बन्, जङ्गल।
नागवेली परी खोला गाउँछन् विश्व-मङ्गल ॥
बुद्धको जन्म-भूमि यो सीता भृकुटीको स्थल।
दाग छैन कतै यसमा आमा ! छयौ तिमी निर्मल ॥

तिम्रा गुणहरू गाई सक्दैनौं हामी पुत्रले।
तिमीलाई धपारेर बोल्न सक्दैन छुद्रले॥
एक थोपा रहेसम्म सर्वदा बलिदानले।
सेवा नै गर्नेछौं हामी तिम्रो गौरव मानले॥
त्यो शक्ति हामीमा आओस् त्यो विद्या हामीले पढौं।
तिमीलाई हँसाएर आखिर काखमा मरौं॥

—तमघास रोहिदी (गुल्मी)

*

## म मेरो हैन

—पुण्य "प्रमोद"

कसरी म आफ्नु भनूँ कि-म आफ्नै हूँ
कसरी न भनू कि हैन।
अर्कैको सबै म हैन
केवल म मात्र अर्कैको
म मात्र अर्कैको।
म भन्ने एउटा
तृषा मात्र अर्काको हो
म भन्ने एउटा प्रेरणा मात्र
म त सबै शरीरै यहीं छु

केवल प्यास मात्र अर्काको हो
केवल प्यास मात्र ।
ऊँ ! कसैको आत्मा पनि यहीं आएको थियो
मेरो मलाई लिन आएको थियो
मेरा म को प्यासलाई अझै बढ़ाउन आएको थियो
कि समातेर राख्न सकिन
कोठा भित्र बन्द गरेर राख्न सकिन
र मेरा प्रेरणालाई साथै लिएर गयो
मेरा प्रेरणालाई अझै बढ़ाएर गयो ।
म भन्ने एक प्रेरणा
जवर्जस्त प्रेरणा
आफ्नो दिलबाट फुत्त निकलेर जाने प्रेरणा
अर्काको दिललाई अझै सताउने प्रेरणा
अझै सताउने प्रेरणा ।

म कसरी मेरो भनूँ
म मेरो हूँ कसरी भनूँ
कि–मेरो प्रेरणा ममा छैन
मेरो प्यास ममा छैन

कसरी म मेरो भनूँ
र म मेरै होस् भनूँ
म मेरो हैन
र मेरो म छैन ।

—थोर्गा सिंहापुर ( गुल्मी )



## हाम्रो जीवन

– ओम प्रसाद घिमीरे-खिदिम पोखराथोक ( गुल्मी )

कोपिला जस्तो यो हाम्रो जीवन वैलाई जाने छ।
मनुष्य चोला न गुमाऔं हामी पछुतो हुने छ॥
यसैमा हामी गर्नु छ राम्रो देशको विकास।
यसको मार्ग यसको जग बलीयो निकास॥
यो हाम्रो देश अगाड़ी जाला आलस्य छाडेर।
यी सबै मिली बन्नेछन् एक खराब त्यागेर॥
स्वार्थको पना छाड़न सबै अगाड़ी लम्कन।
हुनेछ हाम्रो त्यसवेला राम्रो देशको आँगन॥
देशकोलागि सहर्ष हामी होऔंत तत्पर।
तँ तँ र मम न गरौं अब न धरौं प्रस्तर॥
अघिको सुन्दर त्यो बाटोलाई न छाड़ ए भाई।
यसको अन्त्य बिपरीत पर्ला न त्याग रिसाई॥
हामीले गर्न नसक्ने कुरा केही छैनन देशमा।
कोशिश गरे यो जान शक्ला अरुको दाँजामा॥
अवत हाम्ले हेरेर बसे हुदैन मङ्गल।
यो हाम्रो देश अगाड़ी लाऊँ यो राम्रो जङ्गल॥
यसमा बसी हुर्केका राम्रा ती हेर जुरेली।
पछित हाम्ले यसमा फेरि बजाँउँला मुरली॥

# भनिदेऊ उनीहरूलाई

—लक्ष्मीशंकरलाल श्रेष्ठ

भनिदेऊ उनीहरूलाई
सिंह-गर्जनापूर्वक भनिदेऊ—
छात्र हौं हामी
अध्ययन मनन, चिन्तनशील;
हाम्रो ध्येय मात्र विद्या
र ज्ञानको आर्जन हो !
श्यालजस्तो कुटिल चाल चली
हाम्रो एकता, लगनशीलता
र बुद्धिको शोषण गर्ने
कुनै अधिकार छैन तिमीहरूलाई !
हामी भर्खरै फक्रिनलागेका कोपिला हौं
र अनुभवहीन पनि
तै हामी छैनौं विवेकहीन;
चिन्दछौं बाटो सत्यको, लक्ष्यको, ध्येयको।
जननी जन्मभूमि स्वदेशको
माटोको महिमा गाउँदा लाजमान्नेहरू—
देशाभिमानको छाला ओढ़ेर
अब तिमीहरू कृतघ्न खेल नखेल,

अन्य देशहरूको स्तुतिगान नगर;
तिमीहरूको कपट कुटिल चालले
हामी कदापि लोभिने होइनौं !

जाति-संघर्ष, भाषा-संघर्ष, वर्ग-संघर्ष
अनि राष्ट्रिय एकता छिन्न विछिन्न गर्ने।
तिमीहरूका अन्य सबै कुराहरूका मर्म
हामी बुझेका छौं, बुझ्दछौं र बुझ्नेछौं।
स्वाभिमानको रक्षा गर्ने
राष्ट्रिय जीवन-संघर्षको परमोच्च ध्येय
हामीले खुब चिनेका छौं, जान्दछौं।
आत्माहुतिले दुष्ट वैरीहरूको दलन गर्ने,
युद्ध गर्दागर्दै मृत्युको स्वागत गर्ने,
मर्दापनि अनुहारमा स्वर्गीय मुस्कान हुने
वीर पूर्वजहरूका हामी सन्तान हौं।
यस्ता चरित्रबल सम्पन्न पुर्खाहरूका
यश र कीर्तिमा धब्बा लगाउने;
स्वदेश, स्वराष्ट्र, स्वधर्म र संस्कृति परम्परासंग
निमक हरामी गरेर
मात्र पेटको ज्वाला निभाउन
र अन्य निकृष्ट इच्छाहरूका पूर्तिको लागि विकेका

अन्य देशहरूको निमक सोझ्याउँने
तिमीहरूका गर्हित चाल
हामीले चिनिसकेका छौं—
अब तिमीहरूले कुनै तवरले पनि
आफ्ना दुष्ट आकांक्षाहरूको पूर्तिका निमित्त
हाम्रो शोषण कदापि गर्न पाउन्नौ !
भनिदेऊ उनीहरूलाई भनि देउ,
सिंह-गर्जनापूर्वक भनिदेऊ !



## प्रवासीलाई संझेर

—श्री गोपीकृष्णशर्मा नव्यव्याकरणाचार्य (गोल्डमिडलिष्ट)

( १ )

छाडी आफ्ना परिजन सबै दूर आयौ विदेश
गर्ने ठूलो हिकमत लिई लौ भयो खूब बेश
अर्जी आफै दिनहुँ यसरी बोझ सारा बिसायौ
बाँकी सारा दिन्न पनि यहीं चैनमा नै बितायौ ।

( २ )

लौ भो आयौ दिन पनि कटे मौजमै किन्तु के हो ?
गर्ने, हो यो रगत कसूको जन्मको काम के हो ?

कैल्यै सोच्यौ मन-मन तिमी नै म को हूँ भनेर,
नास्रो यस्तो किन निधतिले हो दिएको गमेर।

( ३ )

तोते बोली अलि-अलि गरी हो सिकेको यसैमा
पोख्ने बानी उपज मनका हो गरेको यसैमा
सिक्छौं उल्था अज पनि उही सम्झँदा अन्य भाषा
बिर्स्यौं ऐले किन नि जननीतुल्य त्यो मातृभाषा।

( ४ )

पाल्ने सम्झी निज शिशु तिमीलाई आमा भनै छन्
ठान्ने आफ्नै वर-पर रही मित्र तिम्रा भनै छन्
केती सारा अब पर भए छैन सम्बन्ध तिम्रो
हेला गर्दा भन न ! मनमा दुःख लाग्दैन तिम्रो।

( ५ )

तिम्रो वस्ती नभइ अहिले जन्म भू शून्य होला,
तिम्रो बोली नरहि अहिले भूमि निस्तब्ध होला;
गर्दा होलान् अझ पनि सबै आज तिम्रो भरोसा,
राख्छन् होला परिजन भनै फर्कने पूर्ण आशा।

—तानसेन, ( पाल्पा )

★

# जीवन

—श्री उमानाथ ज्ञवाली

( १ )

नौलो मञ्चविषे यथा नट-नटी खेल्छन् नयाँ रूपमा,
नाता आदि सबै यथार्थ भरिने निर्माण नाट्यादिमा ।
राम्रो पाठ बन्यो ती पात्रहरूको त्यै नाट्यशालामहाँ,
साँचो हुन्छ जसै ती पात्रहरूको ख्याति हुने अन्तमा ।

( २ )

हाम्रो जीवन हो यथार्थ, पहिलै यै नाट्यशालामहाँ,
गर्ने हो सबले स्वकार्य बुझिल्यौ त्यै छाँटको भेषमा ।
राम्रो यो नवता मिली अब लिई आफ्नो पुरस्कारको—
भन्नै हो सबले मिलोस सबमा ख्याति ठुलो कीर्तिको ।

( ३ )

हामी सुस्त समाई आज हिड्छौं लामो र ठूलो पथ,
जानुपर्छ बसेर रम्य रथमा हाँसेर पारै-पर ।
यो बाटो बुझ भाई हो ! नदीसरी फर्कन्न कैल्है पनि,
जाँदैछन् दुनियाँ तथापि हँसिलो देखिन्न कोहि पनि ।

( ४ )

घोडा; इन्द्रिय घोर दुर्विषयको लामो र टेढो पथ;
कच्चो यो चुँडिने लगाम मनले, चल्दो छ हाम्रो रथ ।

लोभ, क्रोधहरू यिनी हुनगए रोडारूप बीचमा,
पुग्ने हो र कसोगरी भर बिना व्यस्तै हुने कर्ममा।

( ५ )

पत्तै छैन कता कसोरी किन हो जान्नु छ हामी कहाँ ?
'जाने हो सब लौ' भनेर सब ती लाग्ने पछाडि यहाँ।
यस्तो जीवनको विनाश गरने छौं हामी सारा जति,
यस्तै चिम्म परेर हामी दगुरे पर्ने छ धोखा मति।

थोर्गा सिप्तल ढुङ्गा ( गुल्मी )



## उठौं

—श्री ठाकुर प्रसाद पोखरेल

बन्धु !
आजको दिन
अँधेरै अँधेरोमा
निदाई रहे छौं
दुनियाँ त उज्यालै
उज्यालो भएछ
बाटो अपनाए छ
एउटो ले भन्यो
सिङ्गै मान्छे चन्द्रमासित
मित लाउन पुगीरे
उठौं सुती नरहौं
मुखमा पसिना आएको छ
सुस्त गुन्द्रो उल्टेर उठौं
आफु सुतेको ठाउँ
न लख्याऊँ
त्यो पनि हाम्रो हो
तर
उठौं

खाँची ढिकुरा शिवचौर

# मालती

—नारायण सापकोटा

नयाँ दुलही हुनाले होला घरका सासू-ससुरा र वर-परका बुढा-बुढीले पनि 'कस्तो आँखामा राखे पनि नबिझाउने जस्ति रै छ' भनेर मुक्त कण्ठले प्रसंशा गर्दथे।

सानी भए पनि लावण्य र शील स्वभावमा ब्रह्माको पहिलो सृष्टि बनेकी मालती उनकी सानै देखिकी संगिनी थिइन्। बाल्यकालमा भएको शुद्ध प्रेम भाइ-बहिनीको प्रेमबाट आज दाम्पत्य प्रेममा परिणत भएको थियो, यसैले उनको माइतमा पनि उति अनुराग थिएन।

बाहिर लाज माने जस्तो गरे पनि रामुले छनमा गहिरो प्रेम गर्दथ्यो र उनीहरूको जीवन सुखैसित बित्दै गएको थियो।

एक दिन आफ्नो कोठामा मालतीसित धेरै प्रेमका कुरा गरेको आमाले पनि सुनिन् र उनको मनमा तुष पर्‍यो। छोरा-बुहारीको दाम्पत्य प्रेम र उनीहरूको गार्हस्थ जीवन उँचो हुन लागेको रुढीवादीमा लटपटीएका अशिक्षित सासूहरूले कसरी देख्न सक्द थे ? आफु आएको बाटो बिर्सेर उनको डाहा र इर्ष्याको भावना जमिसकेको थियो।

एक दिन बारदलीमा बसेर बत्ती कातेको वेलामा नुन्थलाकी बज्यै र अरु एक दुई बुढी पनि त्यहीं आएर बत्ती र गफको ताल दिन थाले एउटीले भनिन्—'कलिका च्याँठे केटी भएर होला कि ? नटेरेर होला ? लर—क्क कपाल बाटेका छन्, नुक्कल पारेका छन्, आफ्ना

लोग्नेसित बोल्न पनि केही लाज मान्दैनन्, हामी त एक-दुई छोरा छोरी नहुन्ज्यालु बोल्दैनथ्यौं। अर्की—"होइन हाम्री बुहारीले आज बिहानै पाँच पाथी धान कुटून दिएको दुई पाथी मात्रै चाँवल ल्याएर दिई, केहो यस्तो ? बोलौं भने नरसिंह अवतार लिन्छन्, बोल्न हुँदैन'", अर्की—"होइन कान्छी अँस्ति भरखर तीजमा दिएको चोलो धोती आजै फटालेर केही दिएनन् भनेर खस्मान् लगाएर बस्न-खान छैन, हामीहरूले वर्ष दिनमा एक जोड़ा पाउथ्यौं, चाँडै फाटे आफ्ना माहती कहीँबाट ल्याएर लगाए हुन्छ नि!" साहुनी साहेबले पनि त्यसमा केही दुईचार कुराले सहयोग गरिन्—"हाम्री बुहारीको जस्तो भए तपाईंहरू के सहन सक्नु हुन्थ्यो र ? घर आएर 'हजूर!' भनेर दिएकी छोरीले त मसित ठसमस गरेर बस्न खान छैन, के छोराको अर्को बिहे गर्न न सक्ने हो र ? यस्ती पाजी बुहारी जति भने पनि आउँछन् 'खुकुरी भए दला कति पाइन्छन् कति'।

असारको महीना भोको पेट पानी बर्सीराखेको हुनाले चारैतिर सुनसान थियो मलीन मुख बनाएर मालती हँसिया नाम्लो लिएर तल्लो बारीतिर लागिन्।

एता साहुनीले ठाडा-ठाडा आँखा देखाएर रामुसंग भनिन्—"म यो रातौं दिनको बाह मुक्कान् सहन सक्दिन, तेरी स्वास्नीले 'यो बुढी कहिले मर्छे र म गोसेनी हुन पाउँछु' भनीराखेकी छ, तँ चुप-चाप लाग्छस्। तेरी बालाई पनि एक आखर बोल्न न हुँने; म मात्रै सबैको अष्ठारी, सबैलाई हेला गर्ने मैले के मरे पछि सबै संगै लैजानु छ र ?,

अब यस्तो भए पछि म बस्न सक्दिन, कति नै खाए पनि कति अप्ठारी सासू खान पनि पेट भरी नदिने भन्ने नाम चलेकै छ। देखिस् सुरुक्क खाँड् पार्दै गई, के को बाँस काट्न हुँदो हो र कति जना कहाँ गीएर सासूले बस्न खान दिइन भनेर हिँडेकी छ। इनैको लागि मरीमेटी गर्न पर्ने, इनैको औजस" यस्तै गन्थन-गन्थनले बुढीले बिहान हालिन्।

केही गाउँका प्रतिष्ठित भलाद्मीका छोरा भए पनि शिक्षामा अगाडि बढ्ने र आफ्नो मानसिक विकास गर्ने उनीहरूमा चलनै थिएन बरु ग्रामीण युवतीहरूका गीत-नाचहरूमा आफुले पनि भाग लिने चलन प्रशस्त थियो। 'अन्तर्यामी भगवान् एउटा हुन्। प्रकृति र पुरुषकोट नै यो विश्व सुसज्जित भई राखेको छ। अर्धाङ्गिनी भन्नु नै नारी र पुरुषको आपसमा घनिष्ठ सम्बन्ध भन्नु हो' भनी जान्ने तिनीहरूमा त के शायद त्यो गाउँमा नै कोही थिएन स्त्री जातिको कोमल हृदय त ढुङ्गा जस्तो हुँदो रहेछ। औ आफु हिंडेको बाटो पनि चाँडै बिर्संदा रहेछन् भने, उ त पुरुष न ठहर्‍यो। अतः उसले 'यो मेरी जीवन सहचरी हो यसको जीवन नै ममा आधारित छ' भनेन र सहर्ष आमा बाबुको आज्ञा मान्ने भक्त बन्यो। योग्य र अयोग्यको पनि केही ख्याल राखेन; अठार बाजा घन्काएर पुतलीलाई भित्र्यायो।

एक दिनको कुरा हो पतिदेवको चरणोदकका निमित्त मालती कोठामा जान लागेकी थिइन्, ढोका बन्द हुनाले केही बेर पर्खेर ढोका घच्घच्याइन् 'को हो!' को साथै ढोका पनि खुल्यो। नयाँ दम्पती मौन भएर मुखामुख गरीरहेका रहेछन्, एकाएक झोंक्किएर रामुले

भन्यो "नकचरी जा ! तेरो बाबुले मेरै छोरी हुनाले यहाँ सौंपेर छोडेक न हो, तँ जस्ता ल्याएको पनि छु, पर्दैन गोडाका पानी खान" भन्दै लात मान्यो । बिचरी निर्दोष युवतीमा रुनु सिवाय अरु के थियो र धर-धर आँसु छुटाएर भन्न लागिन्—"म यस्तो बुहार्तनं सहेर कति दिन बस्न सक्छु र ?।"

स्वास्नी मान्छेहरूले बढ़ेका खोला-नालाको केही परवाही राखेका थिएनन्—तीजले गर्दा उनीहरूको मनमा बसन्त आएको थियो, तर मालतीको मुखमा मलीन पनाले छोड़ेको थिएन । शोचेकी थिइन्—"अबं माइतीले पनि मायाँ मारेछन् तीजमा पनि लिन आएनन् भने झुण्डिएर वा काल हालेर मनुं सिवाय अरु के आश्रय होला र ?" मालती यसै कुराको धुनमा थिइन् ।

भातखाने बेला पनि टलिसकेको थियो । मालतीलाई लिन आएको भाई 'शिव ! अबेला भयो पुगिन्न की ?' भनेर छटपटाईं राखेका थियो । सासुले भन्न थाले—"लिन आएपछि लिएर त जाने होला ?, काम गरेको भए पो फेरि आउनु पर्थ्यो, फेरि किन आउनु पर्‍यो र ?" भन्दै चेंदि्रए । ससूले पनि—"अरू कहिले सोधेकी थियौ र आज सोधन पर्‍यो पर्दैन भन्दै मुख बङ्ग्याइन्; ससुराले पनि खसो विदा दिए, मालती आँसुका धारा चुहाउँदै फेरि नफर्कने गरी माईको साथै बाटो लागिन् ।

फोक्सिङ् ( गुल्मी )



# बिलौना

—केदारनाथ घिमिरे

बिरहले छाएको दिन रुन्छ मन गर्दछु बिलौना
अज्ञानको बादलमा आतिएर रुन्छु,
वरिपरि अन्धकार त्यसै दङ्ग पर्छु,
अन्यायको कालो दिन पेट मिची रुन्छु,
सभ्यताको नौलो दिन देखी दङ्ग पर्छु,
बिरहले जलेको मन गर्छु सधैं आँसुको बिलौना ।
धर्म गऱ्यो मानिसले मानिसलाई पेली,
टुप्पिएको सभ्यताले नाघिसक्यो चुली,
मास्तिएको भेलदेखि सारै डर लाग्छ,
थात छोडी मुटु पनि परै परै भाग्छ ।
अचम्मको धर्मलाई देखेर गर्छु रुँदै मनको बिलौना,
मारूँ भने अन्यायलाई छैन मेरो छुरी,
गरीबदेखि सबैजना गर्ने कांधे कुरी,
उन्नतिको पहाड़लाई ठोकी-यन्त्र फोर्ने
नयाँ-नयाँ विरुवामा आगो लगाई पोल्ने,
बढ्दो झन्-झन् कुचाल देखेर गर्छु रुँदै मनको बिलौना ।
रिमिझिमी पानी पर्छ बिजुली चम्केर,
जिब्रो झिकी सर्प बस्छन् भ्यागुतो खोजेर,

वर्षा भनौं वर्षा हैन छराठिला छिन,
झनपछि झन् मेघ आई अँधेरो छिन्छिन,
देखेर यो कालो दिन तर्सी मन गर्दछु बिलौना ।
कसले छोड्यो मोहन अब निद्रा मलाई लाग्यो,
घुनु-घुनु बाजो बज्यो शासनको पालो,
खान पर्‍यो हामले अब धनुषको ताँदो,
झन् पछि झन नराम्रो लागी रून्छ मन गर्दछु बिलौना ।

—धुर्कोट ( गुल्मी )



## सचिदेऊ

—चक्रपाणी शर्मा पोखरेल

आमा ! भएँछु किन हाय ! भई बिकाम को,
सारै भयो नि ! जगमा अब काम लाजको ।
सबमा तिमीको असमान प्रेमता,
अवश्य होला भनी ठान्दछु म ता ।
कोही रहेछन् तिनको बिरुद्धता
अवश्य गर्छन् तिनको उपेक्षता ।
यस्ले अहो ! छाती चिरिन्छ चर्चरी,
चुहीरहेछन् अब आँसु धरधरी ।

आमा तिमी नै सब एक बन्धुकी,
तिम्रा सबै नै प्रिय पुत्र सन्तति,
जन्मीरहेछन् सब एक काखमा,
बढ़ीरहेछन् सब एक तानमा।

परन्तु तिनमा कोही एक दीनता,
अनेक फेरी हुनगै धनाढ्यता,
संसार नै शून्य भए छ आज,
देखदीन केही भलमल्ल काज।

सब हुन् तिनी एक मनुष्य जन्मका,
अवश्य छैनन् ऊचनीच भेदका,
सबमा हुनैपर्छ भनेर खेदता,
लगाई दियौ सब बाल-वृद्धमा।

तिम्रा सपै पुत्र मनुष्य जन्मका,
भई रहेछन् उनी भाव भेदका,
घुमीरहेका यिनी प्राण रक्षक,
चुसीरहेछन् उनी रक्त भक्षक।

अहो! उनीका यिनी भावनामा,
बढ़ीरहेछन् कुन बुद्धि आशामा,
अहो! दुःखीका यिनी पालुवामा,
सेँचिदेऊ एक न विन्दु आमा!

★ —घुकौंट अरौंदी (गुल्मी)

# तिहारको बेला....।

—नागेन्द्र "रसिक"

झलमल तिहारको बेला संझन्छु बिदेश बिरानो,
वारि-पारि देख्छु मैले दीपक जलेका,
दिदी, बहिनी, दाजु, भाई साथमा बसेका,
कोठाभित्र रोई-रोई बस्दछु बिदेश,
दुःख पर्दा बिरहले संझन्छु स्वदेश, झलमल........

आमाको त्यो प्यारो रूप आँसु झैं रहेको,
दाजु, भाई हाँसी, खेली काखमा बसेको,
पढ्न भनी आएको छु बिदेश बिरानो,
स्वदेशको संझनामा बिरह जागेको, झलमल........

टीका लगाई दिदीसंग मालश्सम्म पैरी
मीठा-मीठा रोटी खाई हिड्ने सबै साथी,
संझनाले कल्पनाको घरि पवाँख हाली,
पालुवाको घरमा जाने मन हुन्छ खालि, झलमल.......

—जखोला चोपड़ाकोट ( गढ़वाल )

☆

## जाऊँ घर

—होमनाथ शर्मा

जाऊँ घर नेपाली दाई हो! स्वदेश नेपालै रमाइलो,
जन्म लियौं नेपालैमा, नेपालैमा बढ्यौं,
नेपालको धुलामाथि लडी-बढी खेल्यौं,
सिरी-सिरी हावा लाग्ने उत्तर-हिमाचलको,
हिमाचलै स्वास्थ्य-बर्धक हुन्छ मानवको, जाऊँ......
तबलालाई छोड़ी सुनौं मादलको घन्को,
कोट-टोपी छोड़ी बाँधौं पटुकीको फन्को,
माथमा लगाई ढाका-टोपी नेपालीको चीनो,
गन्नुङ्को खुम्रे भोटो लगाई बसौं भाई हो, जाऊँ......
सुन, चाँदी, ताँबो, काँसो, नेपालमा टम्म,
प्रकृतिको बाहुलीले पालिएर सब,
नयाँ प्रेमको डोरी बाँधी कोदाली र घनले,
खोदलेर झिली-मिली बनाऊँ अब हामले, जाऊँ......

—मानकोट (गुल्मी)

## मानव प्रति

—उदयराज वशिष्ठ

मानव! तँलाई आज
के काम गर्नु छ?

के लक्ष्यमा चल्नु छ ?
के सोच्नु छ ?
एक छिन विचार
गर त।
धनले निस्केको अभिमान,
दुनियाँको माथि चढ्न
आफु सुखले अन्धो बनेर
दुनियाँलाई एक देख्न
अध हो न ! बानि छोड् ।
पक्षपात बिर्सेर
भेदभाव छोड़ेर
सबैसंग हात मिलाई एकै साथ ।
जान सक्छस् भने जा समाज तेरो पनि हो,
मानवताको नातो जोड
नयाँ उदार विचारधारा लिएर
आत्मार्थिको मानवको
कालो हाँडी
लात्तिले—हिम्मत छ भने ?—
हुत्या, परै बजिस्याएर छोड़ ।

★ —खाँची पाली (गुल्मी)

## शरद्को बिहान ल्याऊँ

—नारायण शास्त्री

तोडेर स्वार्थको बादल ल्याऊँ अब शरद्को बिहान ।

जालीहरू बसेका छन् जाल फिंजारेर,
जालमा परी रुन्छन् सँधै खान नपाएर,
तिनको ठूलो विश्वास लिन्छन् ईश्वर सम्भेर,
तिनी यमको क्रूर आत्मा देख्न नसकेर । तोडेर.......

अन्यायले ग्रस्त जीवन हेर्दैन ईश्वर,
सुतिएको समाजले किन हेर्ने हो र,
अमीरले देखुन् भने बढ्छ कहाँ पेट—
झिलीमिली दर्बार र नयाँ ठाट-बाट, तोडेर.......

लाटा-सुधा टाठा भए हाम्रा हक गुम्नन्—
भन्ने क्रूर भावनाले टाठके सचेत हुन्छन्,
एक, दुइ सभ्य पनि स्वार्थपट्टि झुल्ने,
गाउँको त्यो गन्धाईले बजार-बुजार लुक्ने, तोडेर.......

एक पैसामा लोभ गर्ने अमीर त्यो होइन,
आपसमा फुट पार्ने वकील त्यो होइन,
शिक्षितलाई शिक्षा दिने शिक्षक त्यो होइन,
दुःखीलाई दुःख दिने समाज यो होइन । तोडेर.......

—घुर्कोट नेटाखर्क ( गुल्मी )



# आह्वान

—विष्णुप्रसाद पन्थी

स्वदेश हाम्रो नेपाल पारौंन हामी उज्ज्वल,
समता भाव लिएर वढनेछौं कम्मर कसेर
विश्वमा शान राखेको रमाइलो देश छ,
प्रकृतिले सुन्दर साहित्य यहाँ मिल्दछ,
डाँडा र काँढ़ा पहाड़ले सुशोभित भएको,
नौलो विहान देखेर हिमालचुली हाँसेको, ॥ स्व०.......

प्राचीन ऋषि महर्षि यहीपुण्यभूमि नेपालमा
ध्यान गरी बसे थे पहाडका गुफामा,
नदी-नाला वग्दछन् नागवेली परेर
कल्कल गर्ने शब्दले नयाँ सन्देस दिएर, ॥ स्व०.......

कोही मानिस चन्द्रलोक पुगि सके अहिले,
संसारको सामूमा गौरव राखे साथी हे !
पारौं नेपाल चम्किलो आमाको काखमा बसेर
स्वदेश हाम्रो नेपाल पारी छाडौं उज्ज्वल ॥ स्व०.......

—घुर्कोट पण्डित टोला ( गुल्मी )



# आमाले बत्ती बाल्छिन्…।

—कृष्णप्रसाद शर्मा पौडेल

आकाश तले उत्तरमा
प्रकृतिको इशारा,
नौलो युगको सूचना
गाई सबको सामूमा
नेपाल आमाले
बत्ती बाल्छिन्
आफ्नो माथमा।
छोरा-छोरी कांधमा
बोकी नौलो युगमा
साँझ बिहान बेलैमा
गाई नौलो सूचना। आ…
दिदी-बैनी साथमा
प्रेमको नौलो छायाँमा—
बसी आफु-आफुमा
गालो मिलाई गालोमा। आ…
धप्प-धप्प धप्केका
सदै नौला उज्याला
गाजल-रहित सुनौला
दीयाला झैं सुनौला। आ…
उल्टा-पल्टा रङ्गिला
प्रकृतिका इशारा
यिनका भित्र झल्केका
खाक्का दीयाला। आ…
मेचक अन्धकारमा—
बसे भन्ने भावना
लिदै नयाँ काममा
बत्ती बाल्छिन् माथमा। आ…
"मैलोपना छातीको—
फारी नयाँ आशामा—
बढ़ो" भन्ने शानको—
आधारले माथमा। आ…
"नौलो युगको चहलमा
निराशाको भावना,
नहोस्" भन्ने पुकारा—
गरी छोरा-छोरीमा। आमाले…
प्रकृतिको काखमा
हाँसी खेली हुर्केका
आफ्ना छोरा-छोरीमा
दिई शुभकामना। आमाले…
फुल्ने नयाँ डिजाइन
दिलाई छोरा-छोरीमा
"बल्कोस् नय वासना"
लिदै यही कामना। आ…

★ —अर्घा, तुवाकोट (गुल्मी)

# "कालीको सौन्दर्य"

—लाटो साथी

काली ! तँलाई मेरो माया लाग्छ ?
यस्ता बिमानीको के मया ?

यति भनेर बारुले कम्मर लच्काउँदै, वर्खाको भेलजस्तो नयाँ यौवन तरंगमा छचल्किदैं काली पधेराको बाटो लागी। कान्छो त्यहीं चौपारीमा अरुघाँठीलाई पर्खेको बसी बियालो ढुङ्गामा खुर्पा उध्याउँदै थियो। काली हिजो बनमा लाहुरका कुरा चलाएको हुनाले उसंग रिसाएकी थिई, कान्छो मनमा कथ्दै थियो उसलाई फकाउने युक्ति। काली र कान्छा सँगै एकै थालिमा खाईं खेलेका एउटै खलामा हिडे र बढेका सानैदेखिका दमाली हुन्। यसरी हाँस ठट्टा गर्ने र रिसाउने फकाउने बानी पहिलेदेखि नै थियो, जसलाई द्वैले आज सम्म छोडन सकेका थिएनन्।



आत्रेय

कान्छो वाङ्गे ढुटाको गाई गोठमा जिम्वाल बाजेको गाई हेरेर बस्दथ्यो बिहानमा घाँस जान्थ्यो दिउस गाई हेर्न। उसलाई खाजो फरकाएको आटाको गास टिप्नमात्र साझँ बिहान बुढाघर झर्नु पर्दथ्यो।

यसैगरी काली पं० पद्मपाणि पराजुलीको घर नोकर्नी थिईं। बिहान पानी ल्याउने चुलो चौको गर्ने र दिउँस खोरका बाखा हेर्ने गर्दथी। स्वास्नी मानिस भएर जन्मेपछि आई परेका अरुकाम हातपात गर्नु स्वाभाविकै हो। यही थियो यी दुवैको कार्यक्रम।

काली र कान्छाको भेट सधैं दिउँसोपख एकान्त बनमा हुन्थ्यो दुवैजना का आ-आफ्ना कुरा हुन्थे कालीले जुम्रा हेर्दथी, कान्छो गीत गाउथ्यो, मा्चुङ बजाउथ्यो, कहिले खाजा खान्थे, कहिले खोर खान्थे, कहिले काफल खान्थे, कहिले खल्टुक्, कहिले ओड़ारमा लुका मारी खेल्दथे। नयाँ जोबनमा भर्खर पाइला हालेका काली र कान्छीका दिन यसै गरी वित्दथे।

पूस-माघको जाड़ो, बिहानी पखको ठिहिरेटो, त्यसैमाथि अझ काफ्ले नेटाको बतास, घाम नलाग्दै बन पस्न सकिन्नथ्यो। आज कान्छाले मीठो पोहार तापी जापी तीन टवाँलादिन हाल्यो, तर काफल पाटे झुपे, ठुलढुङ्गे चपरे, लामाटारिको बीरे, असिने को लोके, मसिनाको काँसीराम, कसैको मूख देखेन। एकल काट्न्छर चाँडै भारी पुऱ्याउँन पनि सक्दिन, बन पनि बैराग लाग्दो हुन्छ। तर के गरोस् विवश भएर "जति गऱ्यो अल्छी आफैलाई बल्छी" भन्दै पखेराको रोहिनीले भारी पुऱ्याउने सुर कसेर पधेंरा वारीको बाटो तेर्सो लाग्यो।

टक्स्याक् ठ्याक् टक्स्याक् ठ्याक् खुर्पेटो बजाउँदै जान थालेका कान्छाले वारीका कान्लाबाट पधेराका ढुङ्गामा बसेर भर्खर कपाल

नुहाएर मात्र घाम ताप्न थालेकी कालीलाई देख्यो। उसको मनमा के विचार जाग्यो कुन्नि राजुका हाँगामा खुपेंटो टाँगेर लुरू-लुरू चाल् नपाउन्जिदो गरी गयो। कालीको त्यो कपाललाई कान्छाले पहिले त मदेसको दमार जस्तो देख्यो। अलि अगाडी गयो, त्यहाँ मोतीका दाना जस्ता स्वच्छ घामको किरण पाएर टल्कने पानीका थोपा जो जुनेली रातमा ताराजस्ता देखिन्थे र त्यस्तै भएर खस्दथे, देख्यो। अझ अगाडी जाँदा बेटमार चुरटको सेतो कुइरी मण्डल धूवाँ देख्यो। जसभित्र कालीको कपाल बादलमा लुकेका चन्द्रमा जस्तो देखिन्थ्यो।

फुटुङ्ग्री, मटेङ्ग्री, सुन्तली, निर्मली, गंगी, बाटुली, पुतली, केसरी, एक एक गरेर सबैको नाउँ कालीले भनेर सकी। तर तैपनि उसको आँखा छोप्ने मानिस को थियो? चिन्न सकिन। बाठो मानिसले आफ्ना पाखुराले उसको हातमा समेत यसरी बुद्धि पुऱ्याएको थियो उसले छामेर चिन्ने समेत मौका पाईन। अन्त्यमा विवश भएर कान्छाले आफै हात झिक्नु पऱ्यो। कालीले हातको चुरट्को ठुटो भुईमा राखेर हेरी, उसको पछाड़ी कान्छो उभिएको थियो। काली लाजले भुतुक्क भई, बरा? भगीचै सुकाएको सलेकी झयाप्-झुप्प ओढेर बसी।

"छिः कति लाज नमानेको? मुख्खेनी पधेरा आउने बेला भै सक्यो, घाम यति माथी आए गोठालाले गाई फुने बेला हुन आँट्यो, यति बेलासम्म घाँसको एउटो दम्सु तीनं माचिएको छैन। अर्कालाई छः कालमा पधेरामा आएर जिस्क्याई रहने"। साथ पनि न फेरी

उसले काली-पुराण सुनाई। तर कान्छो उसलाई अझै पनि हेरी-रहेको थियो।

हुनत काली मुतुक्कै पारेर निभाएको 'अगार झैं काली थिई, तर भए पनि उसको नयाँ यौवनको कसीमा कसेको स्वरूप कान्छाका तिखा आखाँले हेर्दा साचै नै कुनै स्वर्गकी अप्सराको भन्दा कम देखिदैनथ्यो। भर्खर नुहाएर बसेकी हुनाले उसको मुखमा नीलो आकाशमा प्रातःकालीन अरुणोदयको लालिमा थियो। कालो कपालमा मायाँको संसार बसेको थियो। सँधै बाखाको पाठाको जस्तो कोमल र चञ्चल आँखाले आज यसरी घुरेर हेर्दा रक्सीले चूर भएका बज्याहाका आखाँको दुरुस्त जस्ताको तस्तै प्रतिलिपि लिएको थियो। काली चाहन्थी-कान्छो यहाँबाट केही क्षणको लागि जाओस्। तर उ कालीलाई हेरेर तृप्त भइसकेको थिएन।

"आमै! नि कति सँधै भरि दूध खाने बालख भएको? देख्ने मानिसले पनि के भन्नन्? लौ मुख्खेनी ... काँधमा सेतो धोति, हातमा कालो छत्तर लिएर झनु भयो"।

लगामले घोडा घुमाएझैं कान्छोको दृष्टि कालीका यी कुराले फर्क्यो। उ क्यै नबोली आफ्नो बाटो लाग्यो।

हुन त कालीले उसलाई रिसाएको जस्तो ठानेर "आज साँझ पाँकुरीका ठूला बाजेले नारानको पूजा लाउनु हुन्छ, साँझ चाडो उम्केर जाम्ला भनी" कान्छोतिर फेरी एक पल्ट फर्केर कालीलाई

हेऱ्यो । दुवैका आँखा जुधे । तर पुरुषको निष्ठुर चिन्तनाका अगाडी कोमल प्रकृति कतिसम्म टिक्न सक्दथी ? कालीले मुन्टो निहुराईं कान्छो अगाड़ी बढ्यो ।

कान्छो यो दुनियाँमा एक्लो थियो उसकी आमाले कान्छालाई छः मैन्हाको दूधे बालख छोडेर यो संसारबाट बिदा लिइ सकेकी थिइन् । रनीदेई मरे पछि उसको पालन पोषण एउटा अभागी बाबुको थाप्लोमा आयो । उसको 'पंच शरीर' पनि पोहोर बटौली नून भर्न जाँदा तिनाउ खोलामा बिसर्जित भयो । टुहुरो बिचरो कान्छाको लागि यो सृष्टिमा कुनै थिएन जसलाई उसले आफ्नो सम्झोस । बाबु आमा, दिदी बैनी, इष्ट मित्र, सबैको स्नेहलाई उसले तिलाञ्जलि दी सकेको थियो । यो विशाल संसारमा उसको यो बीरामी हृदयमा मलम लगाउने कुनै थिई भने त्यै काली, केवल त्यै काली, जसलाई कान्छो-को खुशीमा हर्ष छ विषादमा दुःख । यसैको प्रेम सूत्रमा बाँधिएर कान्छो लाहुर जान सकेको छैन नत्र त के हर्के, जोई कवर, 'अल्लरे-हरूले लाहुर गएर वर्षको ५००। ६०० कमाएर ल्याँई रहँदा कान्छाले ३००। जावो मन्द्रमली कमाएर साहू तिर्न सक्ने थिएन ? अवश्य सक्दथ्यो ।

कान्छोले आज कालीलाई त्यो काली देखेन, जुन काली पान बुट्टे घाघरी लगाएर भित्र बाहिर गर्दथी । गाउँका केटाकेटी बटुलेर कहिले खत्रिनीका पाटामा "केरा पाक्यो" खेल्दथी त कहिले उरिम-

भुनि लुकामारी, त कहिले कान्छो दुलहा, म दुलही, पुतली आवै, केसरी लोकन्ती, भुन्टे कुमाल, चपरे डोले, भनेर नयाँ नयाँ बिहा बनाउँथी। आज त्यै काली "छिः कति केटा केटी जस्तो भएको भन्दछे" कान्छो आश्चर्यचकित भएको थियो।

कान्छोले आज पहिलो पल्ट, कालीलाई यौवन पूर्ण अवस्थामा देखेको थियो। न छोटो न मोटो भएको उसको अङ्ग प्रत्यङ्ग, त्यो मधुरो हाँसो, जुन नयाँ उमङ्गपूर्ण यौवनमा सौन्दर्यको बुट्टा भर्दथ्यो। त्यो खुला शरीरमा छातिसम्म बाँधेको गुनियुँ, जहाँ अस्फुट मादकता उम्ले जस्तो लाग्दथ्यो, देखेको थियो। आज बल्ल उसले आफ्नो अतीतको सिंहावलोकन गर्‍यो, अनिमात्र त्यसले कालीको "छिः कति लाज नमानेको" भन्ने वाक्यका अन्तर-अन्तरमा घुसेको भित्री स्नेह र बाहिरी क्रोधको अभूतपूर्व र आश्चर्यजनक सम्मिश्रणको अर्थ पत्तो लायो। उसले यसको निष्कर्षलाई आफुसंग तुलना गर्न भनेर गोजी-बाट ऐना झिक्यो, हेर्‍यो पलौटे दाह्री छाम्यो, जुँघा मुसार्‍यो, मुसुक्क हाँस्यो, अनि थाहा पायो कत्तिको यौटा अर्कोसंग मिल्दो रहेछ। कान्छो गीत सुसेल्दै घाँसको भारी पुर्‍याउने तरखरमा लाग्यो।

कपिलवस्तु नेपाल

[ क्रमशः ]

☆

# यो संसार यस्तै रहेछ

—यमप्रसाद गौतम

जीवनको सफरमा
आशाको लहरमा
अत्यधिक दुःखको बीचमा
जीवनको छोटो अवधिमा
आफुलाई धिक्कारी रहेंछु ।

जेठ मासको धूपमा
पसिनाका धारा चुहाउँदै
पानीको आशामा
काकाकुल जस्तै
यस संसारमा दृष्टि लगाउँदै
बढी रहेछु ।

तर, मृग-तृष्णामा झैं
मेरो आशा
मरुभूमिको सफरमा
आकाशमा उड्दा उड्दै
तप्त हवा र
तप्त किरणले
मेरो छाती जली रहे छ,
शान्त्वना मिल्ला कि भन्दै
सहारा लिन आएँ
तर, मरुभूमिको
तप्त बालुवाले झन् छाती
छिया-छिया पारी रहे छ,
यो संसार यस्तै रहे छ ।

—खिदीम पाखरा थोक (गुल्मी)

# फूल-बारी

—गङ्गाधर घिमिरे

राम्रो छ अत्यन्त फूल-बारी एउटा यहाँ
फुल्छन् मनोहर अनेक फूलें यहाँ
फुल्नु र गिर्नु को परवाह केही छैन,
कति फले केही थाह छैन ।
रहेको खसेको कसैको केही थाह छैन,
कसैले राख्दैन वास्ता, चिन्ता केही छैन,
कसैको रङ्ग छ रातो कसैको छ हरियो,
आफ्नो-आफ्नो तानमा मनोहरको भाव यो,
सुक्छन् कोही फक्रिएर कोही त बालकै,
छैन कसैलाई स्वतन्त्रता, छ मालिककै···
हेर्नेहरू मनोहर हेर्दछन्—फूल-बारीको
फुल्ने र गिर्ने सबै सोच्दछन् अनेक तरहको ।

—खाँची ढिकुरा गैरागोठ (गुल्मी)



नारीहरू पनि पूर्ण शिक्षित नभएसम्म नेपालको वास्तविक बिकास हुनसक्ने छैन । "गुल्मेली आवाज"

## सुशिखर

—केशवराज झवाली

कति राम्रो गुल्मीको शिर झललल रेसुङ्गा विशाल,
एक फेर रेसुङ्गाको धुली बसी हेर,
चीसो मीठो पानी पिई नयाँ जीवन फेर,
तंघासलाई काखमा राखी जुभूङलाई खोला—
पठाएको, गुल्मेलीको शिर यहि होला । कति…

उता हेर अर्को गाउँ रिडी खटाएको,
त्यसैलाई हँस्यू बोकाई पाउर पठाएको;
मीठो मीठो स्वर समाई कोइली रमाएको,
पश्चिम तर्फ अर्जुनले झण्डा समाएको । कति…

वरि-परि डाँडा-काँढा केश फिजारेको,
गुल्मेलीको खरो धान्न मूल फुटालेको;
काँस फुल्ने बगरमा धान फलाएको,
शिर नुमाई रेसुङ्गाको दर्शन गराएको । कति…

डाँडामाथि कल्पनाले बाटो समाएको,
हेर कति गुल्मेलीको मन रमाएको,
रातभरि चन्द्रमाले सुधा खनाएको,
बिहानीले यसलाई दीप जलाएको । कति…

—स्टाल पोखरी थोगी ( गुल्मी )

# ग्रामीण जीवन

—गंगाधर शर्मा

सानो तेंर्प गाउँको सीमा अति निर्मल जलवाला।
बग्छन् निरन्तर कल-कल स्वरले साना खोला-नाला ॥१॥

अलिकति पारि हरियालीले ढल-टल गर्ने पर्वत छन्।
गाउँ यसैमा सारा मानव खुशियालीमा मस्त रहन्छन् ॥२॥

कहीं पर्वत कहिं नदी छन्, कहीं सर दर्पण झैं उज्याली।
कहीं केराका वन बगैंचा छन् कहीं उच्च गिरिनाली ॥३॥

घेरिएकाछन् जसमा अति सुगन्धित झाड़ी।
स्वर्ग-तुल्य जीवन यहाँ, नाम जसको बीर पहाड़ी ॥४॥

कहीं गाउँको बीच बसेर एक क्षण जसले।
आफ्नो कष्ट मिटाउँन सक्छन् यहाँ सबले ॥५॥

हिमालदेखि झर्ना झर्छन् निर्मल शीतल धार।
यहाँ परम सुख, शान्ति नोत आनन्द अपार ॥६॥

गउँ-जऊ धान, मकै, खेत, बारीमा लहराएका।
कोइली, ढुकुर चरा मिली बसन्त गीत गाएका ॥७॥

गाई बाख्रा चराउन भनी झरीरहेछन् गोठाला।
आफ्नो-आफ्नो कार्यमा नै मस्त छन् ती खेताला ॥८॥
आफ्नो श्रमको फल भोग गर्ने ग्रामीण-जीवन यस्तो।
यो ठाउँमा पनि केही नगर्ने ठग्गु अभागी कस्तो ॥९॥

★ —थोर्गा कमेरे डाँडा ( गुल्मी )

## नव प्रभात

—बाबुराम पोखेल

विश्वलाई गराई उज्यालो प्रभात उदायो हे साथी !,
अन्धकार नाश भई हिमालमा गयो,
विश्व व्यापक लालिमाले अब गरिसक्यो,
निदाएका बिछ्यौनाका अल्छी जीवलाई,
कुखुराको शब्द आयो जगाउनलाई। विश्व........।
प्रकृतिले सबका घर ढोका खुलाउँदै,
मनुष्यलाई काम गर्ने सन्देश फिजाउँदै,
शान्त स्वच्छ आँखी अँघि बिहान यो आयो,
अन्धकार निद हाम्रो पर-पर सार्‍यो। विश्व........।
नव प्रभात आयो भन्दै पशु-पन्छी उठे,
कमलका फूलहरू सबै फुलिसके,
सबै जना आफ्नो-आफ्नो काम गर्नथाले,
पक्षीहरू रागमिलाई गीत गाउँन लागे। विश्व........।

★ —अर्घा भलाय डाड़ा (गुल्मी)

# काम गर्नु निकै छ

—चन्द्रमणि वसिष्ठ

स्वदेश छाड़ी बिदेश आयौं पढ़्न भनेर,
बिदेश बसी पढ़नु पर्दा कष्ट भो अघोर।
यो नौलो देशमा पढ़नु बसी यो नौलो भाषामा
भए तापनि त्यो दुःखलाई नलेऊ मनमा।
स्वदेशको दुःख संम्फेर अब शान्तिको साथमा,
अनौठा, नौला काम गर्न सिक सबको साथमा।
भोकै र नाङ्गै दिन-दिन हिड्ने गरीबहरूको—
आत्मानुभूति गर्नको लागि पढ्नु छ साथी! हो!!
गाउँ-घरमा गई अशान्ति-राँको भन् ठूलो बालेर,
शोषक, भाले बनेर डुल्न के भयो पढ़ेर!
'उद्देश्य कुन लिएर आयौ? बिचार हे भाई!
उद्देश्य हाम्रो गर्नु छ पूरा बनेर साहसी।
लक्ष्यलाई पूरा गर्नु छ छिटो अगाड़ि बढेर,
जीवन छोटो भएर पनि काम गर्नु निकै छ।

—अर्घा वाङ्ला (गुल्मी)



# बढ़ौं

—हिराधर घिमिरे

अँघि-अँघि बढौं न साथी ! स्वदेशलाई उज्ज्वल पारन
ठूला-ठूला देशदेखी मेरो मन भुन्छ,
यत्नपूर्वक काम गर्ने पढ़ौं हामी पाठ,
हामीहरू यत्न गरे देश अघि बढ्छ,
मिलीजुली देश फुलाई बढ़ौं बढ़ौं साथ, अघि.......।
देश हेरौं बाहिरका पुगे कहाँ संम,
हामीहरू अल्छीहुँदा पछौटेभो देश,
विदेशका मानिस पनि हामी जस्ता हुन्छन् ,
श्रमी हुँदा विदेशमा काम कस्ता हुन्छन् ? अघि........।
हाम्रो देशमा चीज-बीज कमी केही छैन,
यत्न पूर्वक काम गरे नहुँने क्यै छैन,
उद्योग हीन तेसै हामी ताक्छौ चन्द्र-लोक,
यसै हुँदा स्वदेश भन्दा मान्छौं विदेश बश, अघि........।
अमिर-फकिर सबको सधैं एउटै राखी भाव,
नयाँ-नयाँ कल्पनाका देश बनाऊँ खास,
आकाशको निलीमामा धर्तीको सन्देश,
पुऱ्याउँने हामी हौंला साँचो होला स्वप्न, अघि.......।

खाँची ढिकुरा (गुल्मी)



# मानवमा मानवता

—ऋतुभुंज शर्मा

आज मेरो जिन्दगी किन पिलिपले भईरह्यो,
बोल्छ-बोल्छ भनेर आशा गर्ने भईरह्यो,
मानव ! आज तैले के कुरा बिचार गर्दैछस्,
जे छ आज जानी साथै यसको उल्टो गर्दैछस्,
अब शरीरले दुःख कति पाउने छस्,
यसैको फेरमा परेर स्वयं फेरी मर्ने छस्, आज""""।

आज शरीर चल्दै छ भोलि मिट्टीमा मिल्ने छ,
यस्तै बिचार गर्दामा उल्लु स्वयं भइने छ
यही बिचार मेटनु छ, मानव फेरी बन्नु छ,
धीरता स्वयं लिनु छ कर्तव्यमा रहनु छ, आज""""।

संसारमा आउनु छ मरेर फेरि जानु छ,
आफ्र उद्धार गर्नु छ बिचार स्वयं गर्नु छ,
आउने-जाने संसार छ गरेर छोड्ने अमर छ,
गरेर छोड्न जीवनको राम्रो स्वच्छता छ, आज""""।

दोवार टोला चिदिका (गुल्मी)



# स्वदेश नै रमाइलो

—लक्ष्मी कान्त "प्रकाश"

स्वदेश नै लाग्द छ मलाई रमाइलो बिदेश छोड़ेर,
ए आमा ! जान्न हैं अब तिम्रो आँसु बगेको देखेर,
यहीं जन्में यहीं बढे शिक्षा-दिक्षा पाएँ,
आमा ! तिम्रो गौरवलाई आज सुन्न पाएं,
तिम्रो नाम देखें अब विश्व-इतिहासमा,
बल्ल मेरो मन जाग्यो बस्न तिम्रो काखमा, स्व......।
मलाई भयो तिम्री काखको धूलो पराग जस्तो,
पहाड़को ढुङ्गो पनि सदै कमल जस्तो,
पहाड़को टुप्पाबाट कोइली चरी बोल्छे,
भविष्यको मङ्गललाई बताउन खोज्छे, स्व..........।
झर्ना झर्छन् पहाड़बाट तिम्रो गाना गाउँदै,
विज्ञानको चमत्कार घरि-घरि गर्दै,
खोलाहरू हिंड्ने तल कल-कल गर्दै,
सुन्दर यो प्रकृतिको गान सदैं गर्दै स्व.......।
सूर्य-चन्द्र बोकेको यो फर्फर गर्छ झण्डा,
वीर छोरा यहीं जन्मे छैन कोही धन्दा,
सङ्घर्षमा कैले पनि पछि हट्ने छैनन् ,
दावा गर्ने मानिसले हेर्न सक्ने छैनन्, स्व........।

गाई हेर्नें दाजु-भाई दिदी-बैनी आज,
नयाँ गीत गाउँन ाले नमानेर लाज,
कम्ति छैन केही पनि आमा ! तिम्रो काखमा,
विश्व-विख्यात तिम्रो मुकुट झल्केको छ माथमा, स्व.......।
यस्तो ठूलो आमा ! तिम्रो गौरवलाई तोड़ी,
जान्न म त विदेशमा तिम्रो सेवा छोड़ी,
प्रकृतिले वास गर्ने आमा ! तिम्रो माथमा,
हाँस्दा-हाँस्दै यो शरीर पचाउने छ काखमा, स्व.......।



## आयो वसन्त

—भोजराज पोखेल

जीर्ण लता खसी
छिका बनेका हाँगा बिंगामा
झुम्म गर्न
नयाँ-नयाँ पालुवाको सिर्जना गरेर
कुनै खेलले खुं चीरहेको जीवनम
एक अनौठो खुशियालीको
झलक झलकाई
आयो वसन्त।

चिर-चिर गर्ने लाखौं थरि
चरा-चुरुङ्गी, पशु, मानव
अचेत स्वाँवर सबमा
अरु मौसमा भन्दा
अर्कै उमङ्ग ल्याई
अनेक नाट्य प्रपञ्चको
भात छिपाई
आयो वसन्त।

परीको रूप छिपाई
कोइलीलाई भेजी
एकापट्टि टोलाई रहेको
दुनियाँलाई छक् पारी
नयाँ-नयाँ कल्पनाको
लहरमा चढ़ाई
सबैका युगलमा
बेढङ्गी बाहिरी रूपमा
ढङ्गी प्रेम जुदाई
आयो बसन्त।

★ —अर्घा भलाय डाँडा (गुल्मी)

## छोरो जन्मदा

—गोविन्दराज ज्ञवाली

मुसुक्क हाँसेर शशी उदायो,
विलीन भो शून्य उमङ्ग आयो,
अपूर्ण आशा र भविष्य कल्पना,
झलक्क झलके यसको प्रथामा।
हाँस्ने छ खेल्ने छ हँसाउने छ,
सबै कुरालाई भुलाउने छ,
अशान्तिको भाव विलाउने छ,
मीठो भक्तिको रस ल्याउने छ।
नामी इनामी र छिटो हुने छ,
पढ्ने छ लेख्ने छ र पाल्ने छ,
जसै-जसै यो भव बिर्सने छ,
त्यै काखमा मस्त निद्रा उने छ।

★ मान्कोट (गुल्मी)

# नखाने मन लागी रहे छ

—रामचन्द्र पोखेल

ढोकाबाट एक पल्ट
चियाएको भएर होला !
मरेको ह्रास
एकतिरबाट
पोल्दा पोल्दै
गिद्ध, स्याल, कुकुरहरूले
लुछेको देख्दा
—निकै खुशी हुन पर्ने
ढोका खट्खटाउँदा
हा—र खाएर होला ?
कीरले अस्थि पिञ्जर
मान्छेदेख्दा
बिल्कुल एडब्नेर
दुत्कार खुम्चाई
एक थोपा पनि आँसु नझारेर
ठूलो आँधिमा लगेर
मान्छेको मासु लुछ्ने मन लाग्ने
तर धर्तीको आत्मा भने, किन रोए छ ?

मेरो आत्मा यसको बिपरीत छ;
धर्तीको आँसु
खान परे पनि
नखाने मन लागी रहे छ।

—अर्घा भर्लाय डाडा (गुल्मी)

*

## गरीब

—माधवप्रसाद ज्ञवाली

न खाई न लाई दुःख सही गरीबले पढे
काम पनि पाउदैनन् पेट् उन्को न भरे।
दुःखले सुक्यो शरीर उन्को भोकले सुक्यो पेट
दिन दिन घट्दै जान्छ गरीबको रेट।
चारै तीर मिल्दैन चारो रोइ-रोइ दिन उस्ले गुजारो
धनी बोल्छ उच्चो आसन्माथी झुकी झुकी
खान नपाई गरीब रुन्छ तलै सुखु सुखु।
धनाढ्यले जग्गा ताक्छ घरनका धरकले
रोगी दोषी गरीब भयो पेटका तापले।
कहाँ छ र गरीबको घर जहाँ पनि धनीको महल
जग्गा सबै लेखी दरी धनी कै छ नाम्मा
गरीबको छैन कतै ऊ सदै छ काम्मा।

खान सुत्न बस्न छैन धनीका कामले
सुख सबै दियेको छ धनीमा रामले
राम ? किन मीले न दुःखीलाई पेट भरी खाये र काम गर्न
जोत्ने गरीब खन्ने गरीब किन्ने पनि गरीब
छानी बिनी खाने धनी बेच्ने पनि धनी !
गर्ने रुन्छ खान नपाई रात दिन द्वार्मा
बस्ने हाँस्छ पैसा समाई उहि हिड्छ कार्मा
न्याय तिम्रो के भयो राम ? हास्ने थोरै रुने छन् तमाम
भारीमाथी बच्चा बोक्ने गरीबको ज्ञान
—म्यानमाथी गद्दी चाहिने धनाढ्यको ध्यान
म्यान, मानिस बोक्दा सुखी गरीबको ध्यान
हल्ले मात्र दुःख हुने धनाढ्यको ध्यान
यो छलीको चटकी कला संसारमा जानेको को होला
धनाढ्यलाई रोग लागे डाक्टर्छन् हजार
गरीबलाई मात्र हुन्न साहु लाग्छन् बजार ।
धनी मरे भिन्न महल पर्छन् जहानको
बास छोड्ने न्याय पाउछन् जहान गरीबका
बताउ ति विधाता आज यै न्यायले सुखी छ समाज ?
—गेह्वाँ श्रृङ्गचुली ( गुल्मी )

★

## जागृति गीत

—लक्ष्मण "प्रभात"

आयो ? आयो ?? बादल आयो नभ छायो ?
बसन्तको त्यो रङ्ग उड़ायो, मस्त प्राणीमा होस जगायो
कृषकहरूको काम बढायो, उनमा नव उल्लास दिलायो । आयो....

हलो, कोदालो सबै दिई अब, कृषकहरूको पंक्ति मिलायो
जाग जागको तुमुल ध्वनिमा नव जागृतिको पाठ पढ़ायो, आयो....

धर्ति माँको अङ्ग-अङ्गमा झार, लता, औ वृक्ष जमायो
खहरेहरू उन्मत्त बनायो, जवानीको अब स्मरण दिलायो, आयो....

निमेष भरको समय लिएर प्रवाहको मझधार देखायो
जीवन हो त्यो भेल समान भन्दै जनको मार्ग बतायो । आयो....

जागृति भन्ने समय यही हो मानव ? जाउ कार्य क्षेत्रमा
आलसको अब साथ न लाग भन्दै यसले हात मिलायो ।
आयो ? आयो ?? बादल आयो ? नभ छायो ??–

—घुर्कोट पण्डितटोला (गुल्मी)



## मादकता

—धातानन्द कनाल

जुनेली रातमा देख्दा नायिकाको चमकता।
झमक्क नथनै पारी खिंच दिन्छ मन यता ॥१॥

त्यसैमा मन पार्दिन्छ चम्कि बिजुली कै सरी।
बैसले होस पाएन दीपमा पुतली सुरी ॥२॥

निन्दा गर्छ सबैलाई अनि देवलाई पनि।
त्यस्तै समान मा छैन पितृकार्यादिमा पनि। ३॥

यही व्यक्ति अझ भन्छ गर्छु सेवा समाजको!
मजस्तो ठूलो मानिस छैन कोही रिवाजको ॥४॥

आफुले गर्न जान्दैन दिन्छ दोष समाजमा।
सेखीले मत छाडेन हुने हो कति बेवता ॥५॥

जति धन थियो पैले उपयोगी भए सब।
गरीबको भोको पेट किन हुन्थ्यो कहाँ कब ॥६॥

न आजको भयो काम न नाम पछिको भयो।
परिश्रम बिधाताको बिकाम खेर गैगयो ॥७॥

—धुर्कोट कटौंजे (गुल्मी)



## बाह रे पुत्र !

—नीलकण्ठ गौतम

तेरालागि पितामाता प्राणको बाजि लाउँछन्,
शैवले शिवमा जस्तै सेवामा मन लाउँछन्।
कैयौं भविष्यका आशा तेरा विषयमा लिई,
भोकै नाङ्गै घुमेकाछन् संयमी मनु झैं भई।
परन्तु एउटी ल्वाठे पाएँ भन्दै अनाहक,
एकमोहर पाएको केटा झैं फुस्स पर्दछस्।
अझै समाजको बिच कर्कशे बाबुछन् अनी,
आमाछन् जकर्शी भन्दै कालीको स्तुति गर्दछस्।
बरू पासो लगाएर मरे हुन्थ्यो भुतुक्क नै
व्यर्थै पुत्र लिई नाम पृथ्वीको भार बन्दछस्।

—थोगा (गुल्मी)



## गाउँको सुधार

जि० मु० प्र० पं० रामप्रसाद घिमिरे

देशनिर्माणको लागि गाउँको सुधार गर्नु सब भन्दा मूल कुरो हुन्छ र 'सुधार" भनेर त्यसलाई भनिन्छ जो एक पटक बनेको चीज बिग्रेभत्केको छ र त्यसलाई पुनः मरम्मत गरिन्छ। कल्पना गरौं हाम्रो समाज एक दिन ब्यादै सुध्रेको थियो, तर अनेक कारणवश त्यसमा धेरै अनर्थक चीजहरू आई मिलेकाछन्, जसले गर्दा राष्ट्रनिर्माणमा

ठूलो घक्का पर्न गएकोछ, त्यस्ता सामाजिक दोषलाई जरैबाट गोडी मिल्काई दिनु विशेषितः हामी नवयुवकको कर्तव्य हुन आएको छ। हामीले यो परमावश्यक कार्य गर्दा बीचका रुढीवादी विघ्नहरूसंग डटेर संघर्ष गर्नुपर्दछ, भलै हाम्रा सामुन्ने त्यो रूढीको वलियो जग खड़ा छ तर हामीले यथार्थता र युगानुरूप उन्नतिको बलले त्यसलाई धूलो धूलो पारी गगनमण्डलदेखिने बाहिर मिल्काउँनु परेको छ। ती हाम्रा गाउँमा गड़ेका कुरितिलाई धर्म र संस्कृतिबाट यथार्थ छुटाउनु एउटा प्राचीन र आधुनिक विद्वान्हरूको संयुक्त पंचायती व्यवस्था तैयार छ, जसबाट हामीले हाम्रो विमर्ष गरी रसमात्र राखी खोस्टा फ्यांक्नु छ! मार्टु-गाउँमा कटिबद्ध हामी जस्ता युवकहरूले ती हाम्रा धर्म र संस्कृतिका लाञ्छनलाई पन्छाए पछि मानवतावादी सनातनधर्म सुलंङ्ग देखाउन पर्ने छ।। जसको आधारमा हामो साना ठूलाको भेद मेटेर काँधमा काँध मिलाई बढ़ने मौका पाउँने छौं। त्यतिखेर सम्म हाम्रा दोष सब नष्ट हुनेछन्, तर त्यसमा उत्कृष्ट गुणहरू गर्न त्यसैखाले शिक्षा पद्धतिको व्यवस्था गर्नु पर्दछ. जसमा हामी मानव भ्रातृत्वका मूलमन्त्रहरू मात्र पाठ्यक्रममा राख्ने छौं। एवं हामी भविष्यमा पनि यो पद्धति जारी राख्नु यस किसिमको वातावरण तैयार गर्नु छ, जसबाट हाम्रा समाजमा यस्तो क्षुद्र विचारहरू पस्न न पाउँन्। यसरूपमा वास्तविक जीवन् महत्व र लक्ष्य बुझे पछि मात्र हामी राष्ट्रको उन्नतिको साथ साथै दुवै लोकलाई सुनौला बनाउन सक्ने छौं।

★ —खाँचि दिकुरा शिवचौर (गुल्मी)

# आयोजकको गन्थन

पशुपति 'ज्ञवाली'

जसरि एउटा घर बनाउँदा धेरै ईंटको आवश्यकता हुन्छ र ईंटका लागि पनि माटाको धूलो चाहिन्छ त्यसबाट मात्र मजबूत बनेका ईंट समूहले सुदृढ घर बन्दछ, त्यसरि नै नेपालका समस्त छात्रका भावनाको भव्य महल बनाउन यताउता तितर-वितर भएका छात्रका भावनाहरूलाई धूलो जमाई ईंट पारेर्झैं एकत्रित गर्ने हेतुले नै धेरै दिनदेखि महसूस भई आएको अभावलाई पूर्ति गर्न यो समिति बन्यो र सबैका सहयोगले प्राथमिक अवस्थामा नै यसले केही न केही काम गरी देखाउन सक्यो। आफ्ना जिल्लाका सामाना-नानी (नवकवि) हरूलाई पनि अगाडि सर्ने मौका दिउँ भनी यो पत्रिका प्रकाशनको योजना गरियो। यसको अलावा यस समितिले यस वर्ष निम्नलिखित कार्यहरूपनि गर्‍यो।

(१) सर्वप्रथम आश्विन २१ गते २०२० का दिन मंगलागौरी स्थित बालाजी मन्दिरमा श्री टीकाराम शास्त्रीज्यूको अध्यक्षतामा एक साधारण सभाको आह्वान गर्‍यो र यस वर्षको लागि कार्यकारिणको चुनाव गर्‍यो।

(२) मार्गशीर्ष ८ गते २०२० का दिन श्री पुरुषोत्तम शर्मा ज्यूको अध्यक्षतामा एक वादविवाद गर्‍यो।

(३) मार्गशीर्ष १३ गते २०२० का दिन रायल नेपाल एकेडेमीका सदस्य श्री भवानी "भिक्षु" ज्यूका स्वागतमा गायघाट स्थित मो० सं०

पाठशालामा एक "काव्यगोष्ठी को" आयोजना गर्‍यो, जसमा धेरै-धेरै कविहरूले आ-आफ्ना सरस रचनाहरूको पाठगर्नु भयो।

(४) मार्गशीर्ष १५ गते १, पौष २ गते १, पौष ७ गते १, र माघ १५ गते १ वादविवाद गर्‍यो। प्रत्येक वादविवादमा आ-आफ्ना रचनाहरू पनि सुनाउने नियम गरायो।

(५) अन्त्यमा फाल्गुन १७ गते टाउनहालमा भएको ने० छा० प० वाराणसीको चतुर्थ अधिवेशनमा यस समितिका तर्फबाट श्री राजकुमारज्यूको निर्देशकत्वमा आफ्ना राष्ट्रिय सांस्कृतिक नृत्यकला मध्ये सोरठी, लाखे र कालेकालीको नृत्य देखायो। त्यसमा दर्शकहरू साह्रै प्रभावित भए।

## उक्त नृत्यका कलाकारहरू :—

मादले = श्री लेखनाथ ज्ञवाली, श्री ध्रुवभट्टराई। पुसुङ्गे = श्री "प्रश्रित"। मारुनी = श्री मीनराज "आत्रेय", श्री तारेन्द्रप्रसाद माण्डव्य। गायक = श्री दामोदर ज्ञवाली, श्री होमनाथ शर्मा। लाखे = ध्रुवभट्टराई। घाँडे = प्रश्रित। ढोलके = श्री भीमलाल न्यौपाने, श्री लेखनाथ ज्ञवाली। काले = श्री लेखनाथ ज्ञवाली। काली = श्री प्रश्रित।

उपर्युक्त नृत्यहरूले तमाम दर्शकहरूबाट र ने० छा० प० वाराणसीका तर्फबाट धन्यवाद एवं विशिष्ट पुरस्कारहरू प्राप्त गरे।

नेपालका आध्यात्मिक सूर्य पं० दधिराम उपाध्यायज्यू सदाको

अस्त हुँदा समितिले १७-३-६२ का दिन नगेश 'निरौला'को सभापतित्वमा शोकसभा गरी त्यस अमर आत्माको लागि शान्ति प्राप्त हुने कामना गऱ्यो ।

हाम्रो समितिमा सानो बाबु भएर सबले भन्दा बढ़ी प्रशंसनीय कार्यहरू गर्नुभएकोमा गङ्गाधर घिमिरे ज्यूलाई समिति बोकी न सक्नु धन्यवाद प्रदान गर्दछ ।



# किन र कसरि ?

सभा सञ्चालकको पातो

परमाणुका नातिलाइ पनि चोक्ट्याउन खोज्ने यस जमानामा अगाड़ी पाइला चाल्न तंसेको यो समिति रे निकट भविष्यमा नै सुनौलो प्रभात चाहने "बिहानीपख" को विषयमा "किन र कसरि ?" सबले सोच्नु सजिलै छ र सोच्नु पनि पर्दछ। यस प्रश्नको छोटो र सजिलो उत्तर "थोपा संगाली घैंटो भनु" नै हो।

गाऊँको उन्नतिले जिल्ला र जिल्ला पछि राष्ट्र उन्नत हुन्छ भन्ने सोझो धर्कालाइ हेरी छात्र जस्तो बुद्धिजीवी जंघट भेला हुनुमा के आश्चर्य र के अनावश्यकता ?; अनि हुर्कन लागेका हाम्रा साहित्यमा गाँऊँ-छिऊँ र कुना-काप्चाको भावना उत्साह एवं अवस्था नदेखाई दिने हो भने बर्खाका लहरा झैं त्यो कसरि मौलाउला ?; साथै विज्ञापनको यस आडंवरी जुगमा जिल्ला-विकासको स्तर काँचुली फेरेका सर्प झैं छलंङ्ग कसरि देखिएला ?: फक्रन खोज्ने कोपिलाजस्ता सिकारू कविका भावनाको सुगन्ध हिमालको पाखा-पखेरा देखि तराईको टारी-टिक्कर सम्म फैलिई बिहानीपखको मिर्मिरे उज्यालोमा लौ उठीहाल, भन्ने नयाँ चेतना कसरि आउला ? ।

यिनै प्रहेलिकाका जवाफमा नै 'गुल्मी उत्साहवर्द्धिनी समिति' जन्म्यो र त्यसले जन्मायो "बिहानीपख" ।

यस कार्य र पत्रिकाले तपाईलाइ सबेरैको मनचोर्ने बेलामा कर्तव्यका थालनीमा कम्मर कसी जुरुराउँदै उठ्नलाई जगजगायो भने शायद हाम्रो उत्साह र पत्रिकाको नाम सार्थक होला कि ?

मोदनाथ प्रश्रित

## आर्थिक सहायकहरू

| | | | |
|---|---|---|---|
| युवराज आचार्य | १·०० | गोविन्द प्रसाद पो० | १·०० |
| अशोक कुमार ज० | १·०० | लोकनाथ ज्ञवाली | १·०० |
| तिलकराम खनाल | १·०० | रेवतीरमण पन्थी | १·०० |
| फणीन्द्र आचार्य | १·०० | डिल्लराम पोखेल | १·०० |
| गणेशप्रसाद शर्मा | १·०० | लोकहरि उपाध्याय | २·५० |
| तीर्थराज आचार्य | १·०० | ज्ञानप्रसाद चुदाली | १·०० |
| तोयनाथ आचार्य | १·०० | दण्डिराज पोखेल | ०·६२ |
| भुवनेश्वर ज्ञवाली | १·०० | होमकान्त पोखेल | ०·६२ |
| सिद्धिराज खनाल | १·०० | विष्णुप्रसाद घिमिरे | ०·६२ |
| वामदेव आचार्य | १·०० | कालिदास उपाध्याय | ०·६२ |
| उमानाथ मराखिनी | १·०० | रविलाल घिमिरे | ०·६२ |
| कुलचन्द्र मराखिनी | १·०० | कालिदास घिमिरे | ० ६२ |
| टीकाराम मराखिनी | १·०० | बुद्धिबहादुर खत्री | ०·६२ |
| युवराज आचार्य | १·०० | मित्रलाल शर्मा | ० ६२ |
| शूलपाणि मराखिनी | १·०० | गंगाबहादुर ढेङ्गा | ०·६२ |
| रामकृष्ण मराखिनी | १ ०० | पतिराम शर्मा | ०·६२ |
| तिलकराम पन्थी | १·०० | पुष्करनाथ शर्मा | ०·६२ |
| योगेन्द्रराज पौडेल | १·०० | शम्भुप्रसाद पन्थी | ०·६२ |
| छविलाल पोखेल | १·०० | मित्रलाल उपाध्याय | ०·६२ |
| हरिप्रसाद पौडेल | १·०० | अनन्तराम घिमिरे | ०·६२ |
| होमनाथ गौतम | १·०० | भविश्वर उपाध्याय | ०·६२ |
| दुर्गाप्रसाद शास्त्री | १·०० | हरीप्रसाद घिमिरे | ०·६२ |
| मेघराज गौतम | १ ०० | हिमनाथ घिमिरे | ०·६२ |
| जीवनाथ मराखिनी | १·०० | देवीप्रसाद घिमिरे | १·२५ |
| धनबहादुर थापा | १·०० | पुण्यप्रसाद गौतम | १·०० |

| | | | |
|---|---|---|---|
| घनश्याम गौतम | १·०० | विष्णुप्रसाद ज्ञवाली | ०·६२ |
| कु० रामकृष्ण शास्त्री | १·२५ | चिन्तामणि ज्ञवाली | ०·६२ |
| ठाकुरप्रसाद खनाल | ६·२५ | दामोदर शर्मा खनाल | १·२५ |
| उमानाथ शर्मा | २·०० | शुकदेव भट्टराई | ०·६२ |
| जयन्तीदेवी ज्ञवाली | २·०० | लक्ष्मणराज ज्ञवाली | १·२५ |
| पयोहारी शर्मोपाध्याय | ५·०० | खिमानन्द पोखरेल | ०·६२ |
| देवीप्रसाद गौतम | १·०० | शोभाकर ज्ञवाली | ०·६२ |
| युवराज शास्त्री | १·०० | टीकाराम भण्डारी | ० ६२ |
| भागवत शर्मा | ४·०० | लीलाधर ज्ञवाली | १·१० |
| शोभाकर गौतम | १·०० | अर्जुनप्रसाद ज्ञवाली | १·०० |
| डिल्लीराज ज्ञवाली | १·०० | मणिराम गौतम | १·०० |
| कु० लक्ष्मीदेवी प० | १·२५ | ठाकुरप्रसाद पौडेल | १ ०० |
| माधवप्रसाद पली | १·०० | तेजनारायण उपाध्याय | १·०० |
| रामचन्द्र ज्ञवाली | १·०० | दामोदर शर्मा नेपाल | ३·०० |
| वेदप्रसाद पन्त | १·०० | कृष्णप्रसाद शर्मा | १·०० |
| ऋविन्द्रनाथ शर्मा | १·०० | खेमराज घिमिरे | १·०० |
| गजेन्द्रराज पा० | १·०० | छायादत्त गौतम | १·३० |
| मुनीश्वर उपाध्याय | १·०० | खगेश्वर गौतम | १·०० |
| भीमलाल न्यौपाने | १·०० | हरिप्रसाद ज्ञवाली | १·०० |
| भरतराज ज्ञवाली | १·०० | नागेन्द्र रसिक | १·०० |
| युवराज यादव | १·०० | लक्ष्मीकान्त शर्मा | १·६२ |
| छविलाल थापा | ०·६२ | रामवदन त्रिपाठी | ०·६२ |
| पं० पराशर शर्मा | ०·६२ | मीनराज शर्मा | १·०० |
| प्रेमनारायण भट्टराई | १·०० | चेतनाथ शर्मा | १·०० |
| कृष्णप्रसाद गौतम | ०·६२ | गोपीराज खनाल | १ ०० |

| | | | |
|---|---|---|---|
| कृष्णमुरारी खनाल | १·०० | अङ्गदमणि पो० | १·०० |
| एकदेव पन्थी | १·०० | दयाराम पौडेल | १·०० |
| जनार्दन आचार्य | १·०० | डिल्लीराज अर्य्याल | १·०० |
| केलाधर गौतम | १·०० | गोपीकृष्ण शर्मा | २·०० |
| जीवनाथ गौतम | १·०० | दामोदर ज्ञवाली | १·०० |

| आय : | | व्यय : | |
|---|---|---|---|
| सदस्यताबाट | १८·५० | रसीदबुक-छपाई | ८·० |
| लेखकबाट | २९८·५० | आफीस-खर्च | ८·९६ |
| चन्दाबाट | १२१.३६ | कवि-सम्मेलन | ५.५० |
| कमी भएको | ४५·८८ | सांस्कृतिक-कार्यक्रम | १४·७५ |
| | ४८४·२४ | साहित्य-प्रकाशन— | ४३९·५० |
| | | ब्लकको— | ७·५० |
| | | | ४८४-२४ |





आर्यभूषण प्रेस, ब्रह्माघाट, वाराणसी।

नेपालका कुना-कानीबाट निस्कने साहित्यिक सङ्कलनहरू

पढी स्वदेशी साहित्यको स्वाद लुट्नुहोस् !



| | | |
|---|---|---|
| निस्कँदैछ<br>ने० छा० प० वाराणसीको<br>**छात्रप्रभा** | पाल्पाली<br>नवयुवक हरुको<br>प्रतिनिधि<br>**उजेली**<br>निस्कीसक्यो | बंगाली छात्रको<br>चेतना प्रतीक<br>**सन्देश**<br>आइपुग्यो |
| पश्चिम ४ नं० को<br>नयाँ भावना<br>**कल्याणी**<br>निस्कँदैछ | पश्चिम १ नं० को<br>नयाँ जोश र होसको<br>**नयाँ पाइलो**<br>आयो बाहिर | पश्चिम ३ नं० को<br>उदयसूचक<br>**भानु उदय**<br>उदाई सक्यो ! |
| भ्यूटानी चेतनाको<br>मूर्त्तरूप<br>**सुमन**<br>अँहिले फुली सक्यो | सगरमाथा अञ्चलको<br>**विश्वशिखा**<br>दन्कीरहेछ | **भुवा सौ ?**<br>'प्रमित'को<br>६ घण्टे रोदन काव्य<br>छापियो ! |

आर्यभूषण प्रेस, ब्रह्माघाट, वाराणसीमा मुद्रित

